

# हिन्दू-धर्म के हो ?

**महात्मा गाँधी**

अनुवादक

**माइचन्द प्रधान**

भारतीय इतिहास अनुसंधान परिषद्को तर्फबाट



**नेशनल बुक ट्रस्ट, इंडिया**

# आमुख

महात्मा गान्धीको 125 सौं जन्मदिनका अवसरमा हिन्दू-धर्म माथि उनका समृद्ध चिन्तनलाई पाठकहरूका सामु प्रस्तुत गर्न पाउँदा म अत्यन्त प्रसन्न छु। यो चयन मुख्यतः 'यंग इंडिया', 'हरिजन' र 'नवजीवन'मा गान्धीज्यूद्वारा हिन्दी र गुजरातीमा लेखिएका लेखहरूमा आधारित छ। यद्यपि यी लेख फरक-फरक अवसरहरूमा लेखिएका थिए, तथापि यिनमा हिन्दू-धर्मका यस्ता छवि विद्यमान् छन, जुन आफ्ना विचार-सम्पन्नता, समग्रता र मानव अस्तित्वका मूलभूत द्विविधाहरू प्रति सजगताका विषयमा अन्यत्र दुर्लभ छन्।

'हिन्दू-धर्म' के हो ? मा गान्धीज्यूका चिन्तनको प्रासंगिकता त्यसो त सार्वकालिक छ, तै पनि मेरो विचारमा इतिहासको वर्त्तमान चरणमा यसको विशेष महत्व छ।

यो चयन प्रस्तुत गर्दा मैले नेहरू संग्रहालयका आफ्ना सहकर्मी उप-निर्देशक डा. हरिदेव शर्माको यथेष्ट सहयोग पाएको छु। म नेशनल बुक ट्रस्टको पनि धेरै आभारी छु, जसले भारतीय अनुसन्धान परिषद्का निंति यो पुस्तकलाई यति कम समयमा प्रकाशित गर्ने जिम्मा लियो।

2 अक्टोबर, 1993

**रवीन्द्र कुमार**

अध्यक्ष,

भारतीय इतिहास अनुसंधान परिषद्,

नयाँ दिल्ली

# विषय सूची



# 1

## हिन्दू-धर्म के हो ?

कुनै सत्तारोपित मत नहुनु नै यो हिन्दू-धर्मको सौभाग्य अथवा दुर्भाग्य हो। अतः आफूलाई भूल धारणाबाट बचाउनकालागि नै मैले भनेको छु, सत्य र अहिंसा मेरो धर्म हो। मलाई हिन्दू-धर्मको व्याख्या गर्न लाए म यति नै भन्छु – अहिंसात्मक साधनहरूद्वारा सत्यको खोजी। कोही पनि मानिसले ईश्वरमा विश्वास नगरिकन पनि आफूलाई हिन्दू हुँ भन्न सक्छ। सत्यको अथक खोजीको अर्को नाउँ नै हिन्दू-धर्म हो। हिजआज त्यो मृतप्रायः, निष्क्रिय अथवा विकासशील नभएको बनेको छ भने त्यसको कारण हो, हामी थाकेर बसेका छौं र त्यो मेटिनासाथ हिन्दू-धर्म संसारमा यस्तो प्रखर तेजसित फैलिनेछ, त्यस्तो कदाचित् पहिले कहिल्यै भएको थिएन। अतः निश्चित रूपले हिन्दू-धर्म सबभन्दा धेर सहिष्णु धर्म हो।

---

24.4.1924, पृष्ट 516-518, खंड-23, गान्धी वाङ्मय



2

## के हिन्दू-धर्ममा शैतानको कल्पना रहेको छ ?

मेरो विचारमा त हिन्दू-धर्मको विशेषता नै त्यसको सर्व-संग्राहकतामा रहेको छ। 'महाभारत' का दिव्य लेखकले आफ्ना महान् कृतिका विषयमा जे कुरा भनेका छन्, त्यो कुरा हिन्दू-धर्ममा पनि त्यतिकै लागू हुन्छ। हिन्दू-धर्ममा हरेक धर्मको सार पाइन्छ। र जे-जति चीज यसमा छैन, त्यो असार वा अनावश्यक हो।

---

17.9.1925, पृष्ट 204, खंड-28, गान्धी वाङ्मय



3

# म किन हिन्दू हुँ ?

आफूलाई हिन्दुस्तानको यावज्जीवन मित्र हुँ भन्ने एकजना अमेरिकी बहिनीले लेखेकी छिन् --

> हिन्दू-धर्म पूर्वका मुख्य धर्महरूमध्ये एउटा हो र तपाईले ईसाई-धर्म र हिन्दू-धर्मको अध्ययन गर्नु भएको छ, अनि त्यो अध्ययनको आधारमा आफूलाई हिन्दू घोषित गर्नु भएको छ, त्यसकारण म तपाईसित आफ्नो यो मन-पराइका कारण सोध्ने अनुमति चाहन्छु। मानिसको मुख्य आवश्यकता ईश्वरलाई चिन्नु र साँचो मनले उनको पूजा गर्नु हो भनेर हिन्दू र ईसाई दुवैले मान्छन्। यीशु परमेश्वरका प्रतिनिधि हुन् भन्ने मान्दा - मान्दै पनि अमेरिकाका ईसाईहरूले आफ्ना हजारौं पुत्र र पुत्रीहरुलाई हिन्दुस्तानका मानिसहरुकहाँ यीशुका बारेमा बुझाउन पठाएका छन्। के तपाईं कृपासाथ त्यसका सट्टामा यीशुका शिक्षाहरुका सांथ-साथै हिन्दू-धर्मको तुलना गरिदिनु हुन्छ र हिन्दू-धर्मका विषयमा आफ्ना व्याख्या दिनुहुन्छ ? यो कृपाका लागि म तपाईंको हार्दिक आभार मान्नेछु।

कैयन् मिशनरी सभाहरुमा अंग्रेज र अमेरिकी मिशनरीहरुलाई मैले यो भन्ने साहस गरेको छु – उनीहरुले यीशुका विषयमा हिन्दुस्तानलाई 'बुझाउने' काम नगरेका र 'सर्मन अफ द माउन्ट' मा भनिएका ढंगले आफ्ना जीवन बिताउने गरेका भए, भारतले उनीहरुमाथि शंका गर्नका सट्टामा आफ्ना सन्तानहरुका वीचमा

---

10.10.1927, पृष्ट 170-171, खंड—35, गान्धी वाङ्मय

उनीहरु रहेका कुरामा इज्जत गर्ने थियो र उनीहरुका उपस्थितिले फायदा हुने थियो। आफ्ना यसै विचारका कारणले म अमेरिकी मित्रहरुलाई हिन्दू-धर्मका बारेमा राम्ररी 'सट्टामा' केही 'भन्न सक्तिनँ'। आफ्ना धर्मका बारेमा, विशेष गरी धर्म-परिवर्तनको उद्देश्यले मानिसहरु अरुलाई जे भन्छन्, त्यसमा मलाई विश्वास लाग्दैन। विश्वासमा कसैलाई केही भन्ने ठाउँ रहेको हुँदैन। विश्वासमा त आचरण गरिनुपर्छ र त्यस बेला त्यसले आफ्नो प्रचार आफै गर्छ।

अनि आफ्नै जीवनबाहेक अरु कुनै प्रकारले हिन्दू-धर्मको व्याख्या गर्ने योग्यता भएको आफूलाई म ठान्दिनँ। र लेखेर म हिन्दू-धर्मको विषयमा बुझाउन सक्तिनँ भने ईसाई धर्मसित त्यसको तुलना पनि गर्नसक्तिनँ। यस कारण म यति नै गर्न सक्तछु, यथासम्भव संक्षेपमा म किन हिन्दूँ हुँ, त्यो भन्न चाहन्छु।

म वंशानुगत गुणहरुका प्रभावमा विश्वास राख्दछु, र मेरो जन्म एउटा हिन्दू परिवारमा भएको हो, यसकारण म हिन्दू हुँ। र मलाई यो आफ्ना नैतिक बोध वा आध्यात्मिक विकासका विरूद्धमा भएको लागे म यसलाई छोड़िदिन्छु। अध्ययन-द्वारा जुन धर्मका बारेमा मैले जानेको छु, तिनमा मैले यसलाई सबभन्दा बढ़ता सहिष्णु पाएको छु। यसमा सैद्धान्तिक कट्टरपना छैन, यो कुराले मलाई ज्यादै आकर्षित गर्छ, किनभने यसकारणले यसका अनुयायीले आत्माभिव्यक्तिका निंति धेरभन्दा धेर अवसर पाउँछ। हिन्दू-धर्म वर्जनशील छैन, अतः यसका अनुयायीले अरू धर्मलाई आदर गर्नसक्ने मात्र होइन, ती सबै धर्मका राम्रा कुराहरूलाई मन पराउन र अप्नाउन सक्तछन्। अहिंसा सबै धर्ममा छ, तर हिन्दू-धर्ममा यसको उच्चतम अभिव्यक्ति प्रयोग भएको छ। (म जैन र बौद्ध धर्मलाई हिन्दू-धर्मबाट पृथक् भएको मान्दिन।) हिन्दू-धर्मले केवल सबै मानिसहरुका एकात्मतामा मात्र होइन तर सबै जीवनधारीहरुका एकात्मतामा विश्वास गर्छ। मेरो विचारमा गाईको पूजा मानवीयताको विकासको दिशामा त्यसको एउटा अदभूत योगदान हो। सबै जीवनहरुको एकात्मता र यसकारण सबै प्रकारका जीवनको पवित्रतामा यसका विश्वासको यो व्यावहारिक रूप हो। भिन्न योनिहरुमा जन्म लिनुपर्ने महान् विश्वास, यसै विश्वासको सोझो फल हो। अन्त्यमा, वर्णाश्रम धर्मको सिद्धान्तको खोजी सत्यको निरन्तर खोजीको एउटा अत्यन्त सुन्दर परिणाम हो। माथि भनिएका कुराहरुका परिभाषा दिएर म यो लेखलाई लम्ब्याउन चाहन्नँ। म त यहाँ यति मात्र भन्छु - गो-भक्ति र वर्णाश्रम सम्बन्धी आजको विचार, मेरो धारणामा, मूल गो-भक्ति र वर्णाश्रमका विकृति मात्र हुन्। इच्छा हुनेहरुले 'यंग इण्डिया' का अघि-अघिका अंकहरुमा वर्णाश्रम र गो-भक्तिका परिभाषा हेर्न सक्छन्। म निकट

भविष्यमा नै वर्णाश्रमका विषयमा केही भन्ने आशा गर्छु। यो अत्यन्त संक्षिप्त रूपरेखामा मैले केवल हिन्दू-धर्मका ती विशेषताहरुका विषयमा भनेको छु, जसले मलाई हिन्दू बनाएर राखेको छ।

[अग्रेंजीबाट]

यंग इंडिया, 20.10.1927



# 4

# हिन्दू-धर्म

आफ्नो मद्रास - यात्राको समयमा अस्पृश्यताको समस्यामाथि बोल्दै मैले जति जोड़दार प्रकारले आफूलाई सनातनी हिन्दू हुँ भनेको थिएँ, त्यति नै जोड़दार प्रकारले त्यस्तो कुनै दृढ़ता पहिले कहिल्यै देखाएको थिइनँ। तै पनि हिन्दू-धर्मका नाउँमा यस्ता धेरै काम भइरहेका छन्, जुन मलाई स्वीकार्य छैन। वास्तवमा म त्यस्तो छैन भने मलाई सनातनी हिन्दू अथवा अरू कुनै प्रकारको हिन्दू कहलाउने कुनै इच्छा छैन र निश्चय नै एउटा महान् धर्मको आड़मा कुनै सुधार वा नीचता प्रस्तुत गर्ने मेरो कुनै इच्छा कदापि हुने छैन।

यस कारण सनातन धर्मको जुन अर्थ म लगाउँछु, त्यसलाई एकपल्ट अन्तिम रूपमा स्पष्ट गरिदिनु म आवश्यक सम्झन्छु। सनातन् शब्दको प्रयोग म त्यसको स्वाभाविक र प्रचलित अर्थमा नै गरिरहेको छु। म आफूलाई सनातनी हिन्दू हुँ भनेर यी कारणले भन्छु –

1. म वेद, उपनिषद्, पुराण र हिन्दू-धर्मग्रन्थहरुका नाउँले प्रचलित सम्पूर्ण साहित्यमा विश्वास राख्छु; र यस कारण अवतार औ पुनर्जन्ममा पनि।
2. म वर्णाश्रम धर्मको त्यो रूपमा विश्वास राख्छु, जुन मेरो विचारमा विशुद्ध वैदिक छ, तर त्यसका आजकलका लोक-प्रचलित र स्थूल रूपमा मेरो विश्वास छैन।

---

6.10.1921, पृष्ट 256, पृष्ट 260-261, खंड—21, गान्धी वाङ्मय

3. म गोरक्षामा त्यसका लोक-प्रचलित रूपहरु भन्दा पनि धेरै व्यापक रूपमा विश्वास गर्छु।

4. म मूर्ति-पूजामा अविश्वास गर्दिनँ।

वेदहरुका सन्दर्भमा मैले जानी-जानी अपौरूषेय वा ईश्वरीय विशेषण प्रयोग नगरेको कुरामा पाठकहरुले ध्यान दिन्यैछन्। यसको कारण हो, केवल वेद नै अपौरूषेय वा ईश्वरीय हुन् भन्ने कुरा म मान्दिनँ। 'बाइबल' 'कुरान' तथा 'जेन्द अवेस्ता' लाई पनि म त्यतिकै ईश्वर-प्रेरित मान्छु। यसका अतिरिक्त हिन्दू-धर्मग्रन्थहरुमा रहेको मेरो विश्वासले मलाई कहिल्यै भन्दैन, तिनका एक-एक शब्द, एक-एक पंक्तिलाई मैले ईश्वर-प्रेरित मान्नुपर्छ। मैले यी अदभूत ग्रन्थहरूलाई मूल रूपमा स्वयं अध्ययन गरेको छु भन्ने धृष्टता म गर्न सक्तिनँ, तर यति म अवश्य दृढ़तासाथ भन्नसक्छु, तत्त्वतः तिनले जे सिखाएका छन्, तिनको सत्यलाई म जान्दछु र त्यसलाई अनुभव पनि गर्छु। तिनको जतिकै पाण्डित्यपूर्ण व्याख्या गरिए पनि तिनले मेरा विवेक र नैतिक बुद्धिलाई रूचेन भने म त्यस्ता कुनै पनि व्याख्याको बन्धनलाई स्वीकार गर्न तैयार छैन। वर्त्तमान शंकराचार्य र शास्त्रीहरुका हिन्दू-धर्मग्रन्थहरुका ठीक-ठीक व्याख्या दिने कुनै पनि दृढ़तालाई (यस्तो दृढ़ता देखाइन्छ भने) म त्यसलाई जोड़दार शब्दमा अस्वीकार गर्छु। यसका विपरीत, यी ग्रन्थहरुका हाम्रा वर्त्तमान ज्ञान अत्यन्त नै अव्यवस्थित अवस्थामा छ भन्ने म मान्छु। हिन्दूहरुको यो सूत्रमा मलाई पूर्ण विश्वास छ, जसले अहिंसा, सत्य र ब्रह्मचर्यलाई सिद्ध गरेको छैन, जसले धन-सम्पत्तिको आकांक्षा वा त्यसलाई राख्ने लालसालाई त्याग गर्नसकेको छैन, उसले वास्तवमा शास्त्रहरूका रहस्यको ज्ञान पाउन सक्तैन। म गुरूमा विश्वास गर्छु, तर यो युगमा र लाखौं-करोडौं मानिसहरु बिना गुरू नै बस्नुपर्छ, किनभने पूर्ण पवित्रता र पूर्ण ज्ञानको संयोग कोही पनि एकजना व्यक्तिमा पाइनु हिजआज साह्रै नै गाह्रो भइसकेको छ। तर कसैले पनि यस्तो सम्झनु हुँदैन – उसले आफ्नो धर्मको सत्यलाई कहिल्यै जान्न सक्तैन। कारण, अरू धर्महरु जस्तै हिन्दू-धर्मका पनि आधारभूत सिद्धान्त सनातन छन् र तिनलाई सजिलै बुझ्न सकिन्छ। प्रत्येक हिन्दूले ईश्वर र उनको अद्वितीयतामा विश्वास गर्छ, पुनर्जन्म र मोक्षलाई मान्छ।

जस्तो आफ्नी पत्नीका बारेमा आफ्नो भावना वर्णन गर्नु मलाई गाह्रो पर्छ, त्यस्तै अवस्था हिन्दू-धर्मका बारेमा पनि छ। उसको ममा जति असर पर्छ, त्यति संसारको अरू कुनै स्त्रीको पर्न सक्तैन। उसमा दोष छँदै छैन भन्ने होइन। म त भन्छु, म उसमा जति दोष देख्छु, वास्तवमा त्यो भन्दा बढ़ता दोष उसमा

होलान्। तर मलाई उसित एउटा अटूट बन्धनको अनुभूति हुन्छ। मेरो यही भावना हिन्दू धर्मका बारेमा पनि छ, चाहे त्यसमा जतिकै दोष होऊन्, त्यसका जतिकै सीमा होऊन्। हिन्दू-धर्मका दुइटै पुस्तक छन्, जसलाई म दृढ़तासाथ जान्दछु भन्न सक्तछु। ती हुन् – 'गीता' र तुलसीकृत 'रामायण'। यी दुवैका संगीतले मेरो मनलाई जति आल्हादित पार्छ, त्यति अरू कुनै वस्तुले पार्न सक्तैन। एकपल्ट मलाई आफ्नो अन्तिम घड़ी आइपुगेको जस्तो लाग्दा 'गीता' बाट नै मैले सान्त्वना पाएको थिएँ। हिजआज हिन्दूहरुका ठूल्ठूला मन्दिरहरुमा जुन प्रकारका नराम्रा कामहरु हुनलागेका छन्, ती म जान्दछु। तिनमा यस्ता दोषहरु छन्, जसका वर्णन पनि हुन सक्तैनन्, तै पनि तिनीहरूसित प्रेम छ। तिनीहरूमा म एउटा विशेष आकर्षणको अनुभव गर्दछु – त्यस्तो आकर्षणको अनुभव म अरू कुनै वस्तुमा पाउदिन। म आदिदेखि अन्त्यसम्म एकजना सुधारक हुँ। तर उत्साहातिरेकमा हिन्दू-धर्मका असल वस्तुलाई पनि छोड़िदिने किसिमको होइन। मैले भनेको छु, म मूर्ति-पूजामाथि अविश्वास गर्दिनँ। कुनै मूर्तिलाई देखेर मेरो मनमा श्रद्धाको कुनै भाव जागरित हुँदैन। तर मूर्ति-पूजा मानव स्वभावको अंग रहेको म सम्झन्छु। प्रतीकहरुप्रति हाम्रो सहज आकर्षण रहन्छ। नत्र अरू ठाउँमा भन्दा गिर्जाघरमा कोही किन धेर गम्भीर बन्छ ? मूर्तिहरुले पूजामा सहायकको काम गर्छ। कोही पनि हिन्दूले मूर्तिलाई भगवान् सम्झँदैन। म मूर्ति-पूजालाई पाप सम्झिदिनँ।

माथि जे-जति भनिए तिनले स्पष्ट भयो होला, हिन्दू-धर्म कुनै वर्जनशील धर्म होइन। त्यसमा संसारका सबै नबी अनि पैगम्बरहरूका पूजाकालागि स्थान छ! त्यो साधारण अर्थमा प्रचारको ध्येय राख्ने किसिमको धर्म होइन। अवश्य, यसका अंचलमा कैयन् जातिहरु समावेश भएका छन्, तर यो त विकासको स्वाभाविक प्रक्रिया जस्तै बढ़ी अदृश्य रूपमा भएको छ। हिन्दू-धर्मले सबै मानिसलार्ह आफ्ना - आफ्नै धर्म-अनुसार ईश्वरको उपासना गर्नुपर्छ भनेको छु र यसकारण् यसको अरू कुनै धर्मसित कुनै प्रकारको झगड़ा छैन।

हिन्दू-धर्मका सम्बन्धमा मेरो यो धारणा छ र यसकारण मैले अस्पृश्यतालाई मात्रका निंति आफ्नो मनलाई कहिल्यै तत्पर पार्न सकिनँ। मैले जहिले पनि यसलाई हिन्दू-धर्मको एउटा ठूलो दोष मान्दै आएको छु। यो साँचो हो, यो दोष हामीमा यहाँ परम्परादेखि चलिआएको हो, तर यही कुरा अरू धेरैवटा नराम्रा वस्तुरहरुमा पनि लागू हुन्छ। केटीहरुलाई प्रायः वेश्यावृत्तिका निंति अर्पित गरिदिनु हिन्दु-धर्मको एउटा अंग भएको सम्झँदा मलाई लाज लागेर आउँछ। तै पनि भारतका कतिपय भागहरुमा अझसम्म पनि यो प्रचलित नै छ। कालीका सम्मुख

खसी-बाखाको बलि दिनुलाई म अधर्म मान्छु र यसलाई हिन्दू-धर्मको अंग मान्दिनँ। हिन्दू-धर्म अनेकन् युगको विकास-फल हो। हिन्दुस्तान मानिसहरुको धर्मलाई हिन्दू-धर्मको संज्ञा विदेशीहरुले दिएका हुन्। कुनै समयमा धर्मको नाउँमा पशु-बलि दिइन्थ्यो भन्ने कुरामा सन्देह छैन। तर यो कुनै धर्म होइन, हिन्दू-धर्म त हुँदै होइन। यसरी मलाई लाग्छ, जब गो-रक्षा हिन्दूहरुको धर्म बन्यो, गोमांस खानेहरू समाजबाट बहिष्कार गरिए। यसकारण निश्चय नै समाजमा ठूलो संघर्ष भयो होला। यो सामाजिक बहिष्कार यो धार्मिक बन्धन नमान्नेहरूमाथि मात्र लागू भएन, उनीहरुका पापका फल उनीहरुका सन्तानहरुलाई पनि भोग्न लगाइयो। जुन दस्तुर शुरूमा संभवतः राम्रा उद्देश्यले शुरू गरिएको थियो, त्यो पछि गएर एउटा कठोर परिपाटीका रूपमा बदलियो। र हाम्रा धर्म-ग्रन्थहरूमा पनि केही यस्ता श्लोकहरु जोड़िए, जसका कारणले यो परिपाटी सर्वथा अनुचित र अन्यायपूर्ण ढंगले स्थायी बन्न गयो। मेरो यो अनुमान सत्य होस वा नहोस, अस्पृश्यता बुद्धि र करूणा, दया वा प्रेमको भावनाको विरूद्ध छ। जुन धर्मले गाईको पूजा गर्ने प्रथा प्रचलन गरयो, त्यसले मानिसको निर्दय र अमानवीय बहिष्कारलाई कसरी समर्थन गर्न सक्तछ, त्यसलाई कसरी उचित ठहरयाउन सक्तछ ? चाहे कसैले मलाई टुक्रा पारे पनि म दलित वर्गहरुलाई छाड़न् सक्तिनँ। जबसम्म हिन्दूले आफ्ना उदात्त धर्मलाई अस्पृश्यताको कलंकले दूषित राख्छन्, तबसम्म तिनीहरु कहिल्यै स्वतन्त्रताका पात्र बन्न सक्तैनन् र न त त्यो प्राप्त नै गर्न सक्नेछन्। म हिन्दू-धर्मलाई आफ्ना प्राणभन्दा पनि धेर प्यारो गर्ने भएको हुनाले यो कलंक सहनु मेरा लागि असंभव भइसकेको छ। हामी आफ्ना जातिका पाँचौं अंशलाई हामीसित बराबरीको दर्जामा भेटघाट गर्ने अधिकारबाट वंचित राख्छौं भने त्यसको अर्थ हो, हामी ईश्वरको सत्तालाई अस्वीकार गर्छौं।

[अंग्रेजीबाट]

यंग इंडिया, 6.10.1921



# 5

# सनातन हिन्दू

जसो-जसो बाजे उसै-उसै नाति भने जस्तो म छैनँ। यस कारण संसारका विभिन्न धर्म-ग्रन्थहरुका भावना बुझ्ने म प्रयत्न गर्छु। म तिनलाई सत्य र अहिंसाको कसीमा घोट्छु; त्यो कसी स्वयं यी ग्रन्थहरुमा नै निर्धारित छन्। जे-जति त्यो कसीमा ठीक निस्कँदैन, त्यसलाई म अस्वीकार गर्छु र जे-जति ठीक निस्कन्छ, त्यसलाई म स्वीकार गर्छु। वेदहरु पढ्ने साहस गरे बाबत एकजना शूद्रलाई रामद्वारा दिइएको दण्डको आख्यानलाई एउटा क्षेपक मानेर म अस्वीकार गर्छु। जे होस, म जुन रामको उपासना गर्छु, तिनी मेरा कल्पनाका पूर्ण पुरूष हुन्। म त्यो ऐतिहासिक रामको उपासना गर्दिनँ, जसका जीवन विषयक तथ्य ऐतिहासिक अन्वेशन औ अनुसन्धानका प्रगतिका साथ-साथै बदलि भइरहन्छ। तुलसीदासलाई ऐतिहासिक रामसित कुनै प्रकारको सरोकार थिएन। इतिहासको कसीमा घोट्न थाल्यो भने उनको रामायण मैला द्वांगमा फालिदिनुपर्ने भएर जान्छ। तर आध्यात्मिक अनुभूतिका दृश्यहरु प्रस्तुत गर्ने कृतिका रूपमा उनको पुस्तक अद्वितीय छ, कमसे कम मेरो निंति त त्यो यस्तो छ। तै पनि तुलसीदासका 'रामायण' का नाउँमा प्रकाशित हुने अनेकानेक संस्करणहरुमा पाइने प्रत्येक शब्दलाई म कदापि ठीक मान्दिनँ। म त पुस्तकमा जुन भावना व्यक्त छ, त्यसमा मन्त्रमुग्ध छु। शूद्रहरुका वेदाध्ययनमाथि लगाइएका प्रतिबन्धलाई म स्वयं स्वीकार गर्न सक्तिनँ। अहिले जबसम्म हामी परतन्त्र छौं, हामी सबै मुख्य रूपले शूद्र नै छौं भन्ने मेरो मान्यता छ। ज्ञानमाथि कुनै श्रेणी वा वर्गको विशेषाधिकार हुँदैन। हो, म सम्झन्छु, जसरी

27.8.1923, पृष्ट 116, खंड—28, गान्धी वाङ्मय

पहिलेदेखि नै तैयारी नगरी कोही पनि व्यक्ति अग्लो ठाउँमा, जहाँ हावाको घनत्व अत्यन्त कम्ति हुन्छ, साँस फेर्न सक्तैन, अथवा जसले सामान्य गणितको शिक्षा पाएको छैन, उसले रेखागणित वा बीजगणित बुझ्न सक्तैन, त्यसरी नै धार्मिक क्षेत्रमा पनि प्रारम्भिक शिक्षा प्राप्त नगरी मानिसहरूका निंति उच्चतर वा सूक्ष्मतर सत्यहरूलाई ग्रहण गर्नु असम्भव हुन्छ। र अन्त्यमा म यही भन्छु, म केही स्वस्थ परम्पराहरुमा विश्वास गर्छु। गायत्रीको जापको बारेमा पनि एउटा परम्परा छ – त्यो हो, निर्धारित रीतिले स्नानादि कृत्य भइसकेपछि निश्चित समयमा नै गायत्रीको जाप गर्नुपर्छ। म ती परम्पराहरुमा विश्वास राख्छु र सँधै म तिनलाई पालन गर्न पाउँदिनँ, त्यसैले म वर्षौंदेखि परवर्ती सन्तहरुलाई अनुसरण गर्दै आएको छु र म 'भागवत' का द्वादश-मन्त्रका जापले अथवा तुलसीदासका सरलतर पद्धतिलाई अनुसरण गरेर औ 'गीता' तथा अरु पुस्तकहरुका केही चुनिएका श्लोकहरु अनि भाषाका केही भजनहरुलाई पाठ गरेर सन्तोष गर्दै आएको छु। यी मेरा दैनिक अध्यात्मिक आहार हुन्। यी नै मेरा 'गीता' हुन्। मलाई जुन शान्ति र आत्मतोषको प्रतिदिन आवश्यकता पर्छ, ती सबै यिनीहरुबाट पूरा-पूरा प्राप्त हुन्छ।



## 6

# माला कि चर्खा ?

म जता-ततै चर्खे-चर्खा देख्दछु; किन भने म जता-ततै निर्धनता देख्छु। हिन्दुस्थानका अस्थि-पञ्जर-मात्र मानिसहरुले जबसम्म अन्न-वस्त्र पाउँदैनन्, तबसम्म उनीहरुका लागि धर्म नाउँको कुनै वस्तु नै दुनियाँमा छैन। उनीहरु आज पशुले जस्तो जीवन बिताइरहेछन् र यसमा हाम्रो पनि हात छ। यस कारण चर्खा हाम्रोलागि प्रायश्चित-रूप बनेको छ। अपंगहरुको सेवा गर्नु धर्म हो। भगवान्‌ले हामीहरुलाई अपंगहरुका रूपमा दर्शन दिन्छन्; र हामी दिन्हौं तिलक-छाप लगाएर पनि उनीहरूलाई ईश्वरलाई हेला गर्छौं। ईश्वर वेदमा छन् पनि, छैनन् पनि। जसले वेदहरुका सोझा अर्थ लाउँछ, उसले तिनमा ईश्वरको ज्योति देख्छ र जो तिनका शब्दहरूसित टाँसिएर, उसलाई हामी 'वेदिया' (पुस्तक-पंडित) भन्छौं। हो, नरसिंह मेहताले मालाको स्तुति अवश्य गाएका छन्; तर त्यहाँ त्यो उचित पनि थियो। तिनै मेहता शिरोमणिले यसो पनि भनेका छन् –

> शुं थयुं तिलकने तुलसी धार्या थकी,
> शुं थयुं माल ग्रही नाम लीधे ?
> शुं थयुं वेद व्याकरण वाणी वदशे,
> शुं थयुं वरणना भेद जाण्ये ?

अवश्य नै मुसलमानहरू 'तसबीह' जप्छन् र ईसाईहरू 'रोजरी'। तर कसैलाई साँपले ठुंग्यो र उनीहरू 'तसबीह' र 'रोजरी' छोड़र उसलाई मदत गर्न नगए

14.8.1924, पृष्ट 552-555, खंड—24, गान्धी वाङ्मय

उनीहरूले आफूलाई धर्मभ्रष्ट भएका मान्ने छन्। ब्राह्मणहरु वेदहरु पढ्दैमा मात्र धर्मगुरू बन्दैनन्। त्यस्तो हुने भए वेदहरुका ज्ञाता मेक्समलर पनि हाम्रा धर्मगुरू हुन्थे। वर्तमान युग-धर्मलाई जान्ने ब्राह्मणले वेदाध्ययनलाई गौण मानेर अवश्य नै चर्खा-धर्म प्रचार गर्नेछ र करोड़ौं क्षुधा-पीड़ितहरुका भोक मेटाइसकेर मात्र स्वाध्ययनमा रत हुनेछ।

मैले चर्खा चलाउनुलाई साम्प्रदायिक धर्महरुभन्दा श्रेष्ठ ठानेको छु। यसको अर्थ सम्प्रदायलाई नै छोड़िदिनुपर्छ भनेको होइन। त जुन धर्मलाई पालन गर्नु हरेक सम्प्रदाय र धर्मका अनुयायीहरुकालागि आवश्यक छ, ती तमाम सम्प्रदाय र धर्महरू भन्दा अवश्य श्रेष्ठ हुन्छ, यसै कारण म भन्छु, जुन ब्राह्मणले सेवाले चर्खा चलाउँछ, त्यो धेर उत्तम ब्राह्मण, त्यो मुसलमान, धेर उत्तम मुसलमान र त्यो वैष्णव, धेर उत्तम वैष्णव बन्दछ।

तर जब माला विघ्न-रूप लाग्ने प्रकारको एकाग्रता ममा आउँछ, तब म त्यसलाई छोड़िदिन्छु। म सुती-सुती चर्खा चलाउन सक्ने भएको भए र मलाई राम-नाम लिँदा त्यसको सहायता आवश्यक हुन गए म अवश्यै मालाको सट्टामा चलाउनैछु। ममा माला जप्ने र चर्खा चलाउने दुवै सामर्थ्य एकैचोटि भए र दुवैमध्ये एउटालाई छान्नुपर्ने भए जबसम्म देश गरीबी र भोकले पीड़ित छ, म चर्खारूपी माला जप्नु नै मन पराउनेछु। म त्यस्तो समयको प्रतीक्षामा छु, जब राम-नाम जप्नु पनि मलाई उपाधि-रूप लाग्न थाल्ने छ। जब 'राम' वाणी भन्दा ठूलो भएको मलाई अनुभव हुनेछ, तब 'नाम' लिइबस्ने आवश्यकता नै रहने छैन। चर्खा, माला र राम-नाम; मेरा लागि यी अलग-अलग वस्तु होइनन्। मलाई त यी तीनैवटाले सेवा-धर्मको शिक्षा दिन्छन्। सेवा-धर्म नगरी मबाट अहिंसा-धर्म पालन हुन सक्तैन र अहिंसा-धर्म पालन नगरी मबाट सत्यको खोजी हुन सक्तैन। सत्यबाहेक अरू धर्म छैन। सत्य नै राम हो, नारायण हो, ईश्वर हो, खुदा हो, अल्लाह हो, गड हो।



# 7

## छुवाछुत

धर्मका नाउँमा हामी हिन्दूहरुले बाहिरी कुराका खूबै आडम्बर रचेका छौं र धर्मलाई खालि खानपिनको विषय बनाएर त्यसको प्रतिष्ठालाई घटाइ दिएका छौं। ब्राह्मणत्वलाई जुन अद्वितीय स्थान प्राप्त भएको छ, त्यसका कारण हुन्, ज्ञानद्वारा प्रदीप्त निःस्पृहता, अन्तस्करणको शुद्ध र घोर तपस्या। हिन्दूहरुले खानपिन र छुवाछुतको आध्यात्मिक प्रभावलाई अनुचित महत्व दिन्छन् भने त्यसका कुफल उनीहरूले पाउँछन् नै। हामीले आन्तिरिक पवित्रतामाथि धेर विचार गर्नुपर्छ, हामी अनेकन् आन्तरिक प्रलोभनमा घेरिएका छौं, घोरभन्दा घोर अस्पृश्य र पापपूर्ण विचारहरूका प्रवाहले हामीलाई स्पर्श गरिरहेका छन् आनि अपवित्र बनाइरहेछन्। यस्तो अवस्थामा हामीले आफ्ना पवित्रताका घमण्डमा मस्त भएर आफ्ना ती दाज्यू-भाइहरुका स्पर्शको प्रभावलाई अनि महत्वपूर्ण बनाउनु हुँदैन, उनीहरुलाई हामीले अज्ञानवश र त्यो भन्दा पनि बढ़ी आफ्ना उच्चताका दर्जामा आफूभन्दा साना सम्झन लागेका छौं। ती सर्वशक्तिमान परमात्माका दरबारमा हाम्रो परिचय हामीले के-के खायौं, पियौं र कस-कसलाई स्पर्श गर्‍यौं भन्ने कुराबाट हुँदैन, तर हामीले कस-कसका सेवा गर्‍यौं र कुन-कुन प्रकारले गर्‍यौं भन्ने कुराबाट मात्रै हुन्छ। हामीले कोही पनि विपत्तिग्रस्त र दुःखी मानिसको सेवा गरेका छौं भने उनले अवश्य नै हामीमाथि कृपा-दृष्टि राख्ने छन्। जसरी हामीहरु नराम्रा मानिस र नराम्रा कुराहरुका संसर्गबाट बाँच्नपर्छ, त्यसरी नै नराम्रा, उत्तेजक र मैला

---

5.1.1922, पृष्ट 144-145, खंड—22, गान्धी वाङ्मय

खानपिनबाट टाढ़ा बस्नुपर्छ। तर हामीले यी नियमहरुका महिमालाई चाहिएको भन्दा बढ़ता महत्व दिनु हुँदैन। हामीले भोजनका रूपमा अमुक वस्तुहरुको त्यागको उपयोग आफ्ना कपट-जाल, धूर्तता र पापाचरणलाई लुकाउनका निंति गर्नु हुन्न। कतैं उनीहरुका स्पर्शले आफ्ना आध्यात्मिक उन्नतिमा बाधा नहोस भन्ने आशंकाले हामीले कोही पतित वा मैला भाइ-बहिनीहरुका सेवाबाट आफूलाई पर सार्नु हुँदैन।



8

# मेरो जीवन-कार्य

मेरो नाउँ पैगम्बरसित लिइयोस म आफूलाई यति योग्य ठान्दिनँ। म त एकजना विनम्र सत्य-शोधक हुँ। म यसै जन्ममा आत्म-साक्षात्कार गर्न र मोक्ष प्राप्त गर्नका निंति अधीर छु। म आफ्ना देशको जुन सेवा गरिरहेछु, त्यो त मेरो त्यो साधनाको एउटा अंग हो, जसद्वारा म पाञ्चभौतिक देह धारणबाट आफ्ना आत्मालाई मुक्त गर्न चाहन्छु। यो दृष्टिले मेरो देश - सेवालाई खालि स्वार्थ - साधना हो भन्ने सम्झिन सकिन्छ। मलाई यो नाशवान् ऐहिक राज्यको कुनै अभिलाषा छैन। म त ईश्वरीय राज्य – मोक्ष पाउने प्रयत्न गरिरहेछु। आफ्नो यो ध्येयका सिद्धिका निंति मलाई गुफामा गएर बस्ने केही आवश्यकता छैन। गुफा त म आफूसंग-सँगै लिएर हिंड-डुल गर्छु। अवश्य यसको ज्ञानसम्म भए पुग्छ। गुफा-निवासी साधकले मनमा महल खड़ा गर्न सक्छ, तर जनक जस्ता महलमा बस्नेहरुलाई त्यस्तो महल बनाउने आवश्यकतै पर्दैन। जो गुफावासी विचारहरुका पखांमा बसेर दुनियाँका चारैतिर विचरण गर्छन्, उसलाई शान्ति कहाँ मिल्छ ? तर जनकले आमोद-प्रमोदमय जीवन महलहरूमा व्यतीत गरेर पनि कल्पनातीत शान्ति प्राप्त गर्न सक्तछन्। मेरा लागि त मुक्तिको मार्ग हो आफ्नो देश र त्यो द्वारा मनुष्य-जातिका सेवाका निंति सतत् परिश्रम गर्नु। म संसारका प्राणी मात्रसित आफ्नो तादाम्य राख्न चाहन्छु। म 'समःशत्रौ च मित्रे च' हुन चाहन्छु। यसकारण कोही मुसलमान, हिन्दू वा ईसाईले मलाई घृणा गर्छ भने पनि म उसलाई त्यसै भावले प्रेम गर्न चाहन्छु, जुन भावले म आफ्नी पत्नी र छोरालाई, उनीहरूका घृणाका बदलामा प्रेम गर्छु।

---

3.4.1924, पृष्ट 373, खंड—23, गान्धी वाङ्मय

यसरी मेरो देशभक्ति अरू केही होइन, आफ्नै चिर-मुक्ति र शान्ति लोकको प्राप्ति-पथको एउटा विश्राम-स्थान हो। यसबाट मेरो सामु धर्म-शून्य राजनीति कुनै वस्तु होइन भन्ने थाहा भइहाल्दछ, किनभने त्यसबाट आत्मा मरि जान्छ।

[अंग्रेजीबाट]

यंग इंडिया, 3.4.1924



9

# शुद्धि और धर्मान्तरण

मेरो विचारमा त्यो अर्थमा हिन्दू-धर्ममा त्यसका निंति कुनै स्थान छैन। मलाई लाग्छ, आफ्नो प्रचारको योजना बनाउनमा आर्य-समाजीहरुले ईसाईहरुको देखासिखी गरेका छन्। आफ्नो धर्मप्रति विश्वास उत्पन्न गराउने यो आधुनिक तरीका मलाई मन पर्दैन। यसबाट हितका सट्टामा हानि नै भएको छ। धर्मान्तरण विशुद्ध रूपले हृदयको र व्यक्ति-विशेष तथा उसका स्रष्टाका बीचको वस्तु मानिन्छ, तर हिज-आज यसमा पतन आइसकेको छ, यसकालागि मानिसको स्वार्थपूर्ण प्रवृत्तिहरुलाई उत्तेजित गराउने तरीका अप्नाउन लागिएको छ। आर्य समाजी उपदेशकहरुलाई जुन मजा अरू धर्मलाई बदनाम गर्नमा आउँछ, त्यस्तो अरू कुरामा आउँदैन। एकजना हिन्दूका नाताले मेरो सहज बुद्धिले त यही भन्छ, सबै धर्म न्यूनाधिक सच्चा छन्। सबको उत्पत्ति एउटै ईश्वरबाट भएको हो। र पनि सबै धर्म अपूर्ण छन्; किनभने ती हामीले मानिसद्धारा प्राप्त गरेका हौं, र मानिस कहिल्यै पूर्ण हुँदैन। हरेक व्यक्ति, त्यो पुरूष होस वा स्त्री, आफ्नो-आफ्नो धर्ममा बसेर पूर्णत्व प्राप्त गर्ने कोशिश गर्नुलाई म सच्चा शुद्धि-कार्य मान्दछु। एउटा धर्मलाई त्यागेर अर्को धर्म स्वीकार गर्नाले नैतिक उत्थान हुँदैन भने त्यस्तो धर्म-परिवर्त्तनबाट के लाभ हुन सक्छ ? मेरा सहधर्मी मानिसहरु नै आफ्ना आचरणमा दिनँहु ईश्वरका अस्तित्वलाई अस्वीकार गर्छन् भने फेरि ईश्वरका सेवाका निंति, किन भने शुद्धि वा धर्मान्तरणको मतलब यही मान्नुपर्छ, अरू धर्मका मानिसहरूलाई म आफ्नो धर्मको दीक्षा किन दिउँ ? 'रंगरेज पहिले आफ्नो पगरी रंगाऊ' भन्ने लोकोक्ति

---

29.5.1924, पृष्ट 152-153, खंड—24, गान्धी वाङ्मय

लौकिक कुरामा भन्दा धेर धार्मिक कुरामा लागू हुन्छ। तर यी मेरा निजी विचार हुन्। आर्य - समाजीहरुलाई उनीहरुका अन्तरात्माले यो आन्दोलनका निंति प्रेरित गरेको अनुभव हुन्छ भने यसलाई चलाउने उनीहरुलाई पूरा अधिकार छ। यो उत्कट अन्तर्नादले समयको मर्यादा वा अनुभवका अंकुशलाई स्वीकार गर्दैन। अन्तरात्माको आवाजमा कोही आर्य-समाजी वा मुसलमानले आफ्ना धर्मको प्रचारका कारणले हिन्दू-मुसलमानको एकता खतरामा पर्छ भने निश्चय नै त्यो एकता सतही हो। हामी यस्ता आन्दोलन देखेर किन त्यति डराऊँ ? तर तब यी आन्दोलनहरु शुद्ध भावले प्रेरित हुनुपर्छ। एकपल्ट मुसलमान भइसकेकाहरु फेरि हिन्दु-धर्मलाई अंगीकार गर्न चाहन्छन् भने उनीहरुलाई त्यसो गर्ने पूरा-पूरा हक छ। तर आफ्ना धर्मका प्रचारका निंति अरू धर्मको निन्दा गर्ने प्रवृत्तिलाई चल्नदिनु हुँदैन किनभने यो सहिष्णुताका भावनाको नितान्त विपरीत हो। यस्ता प्रकारका प्रचारको विरोध गर्ने सबभन्दा राम्रो उपाय हो – स्पष्ट भाषामा त्यसको भर्त्सना गर्नु।



# 10

## हिन्दूले के गर्नुपर्छ ?

हिन्दुस्तानका अधिकांश मुसलमान र हिन्दूहरू एउटै 'मूल' का हुन्, तापनि धार्मिक वातावरणले तिनीहरुलाई एक अर्काबाट भिन्न बनाइ दिएको छ। म यो कुरालाई मान्छु र मैले यो देखेको पनि छु, विचारहरुका कारणले मानिसका रूप र स्वभाव बदलिन्छन्। सिखहरु यो कुराका ताजा उदाहरण हुन्। मुसलमानहरु बहुधा अल्पसंख्यक नै छन् र यसकारण समुदायका रूपमा तिनीहरु आततायी बनेका छन्। अनि त तिनीहरु एउटा नयाँ परम्पराका उत्तराधिकारी भएका छन्। यसले गर्दा तिनीहरूमा जीवनको यो अपेक्षाकृत नयाँ प्रणालीको अनुरूप साहस भएको देखा पर्छ। मेरो रायमा त 'कुरान' मा अहिंसालाई मुख्य स्थान छ, तर 1300 वर्षदेखि साम्राज्य विस्तार गर्दै आएका हुनाले मुसलमान जाति लड़ाकु जाति भएको छ। त्यसकारण उनीहरूमा जबर्जस्ती गर्ने बानी बसिसकेको छ। गुण्डापन त्यो जबर्जस्तीपनाको एउटा स्वाभाविक परिणाम हो। हिन्दूहरुको सभ्यता अत्यन्त प्राचीन हो र उनीहरूमा अहिंसा समावेश भएको छ। उनीहरुको सभ्यता ती सम्पूर्ण अनुभवहरुबाट उहिल्यै पार भइसकेको छ, जसबाट यी दुइवटा नयाँ जातिहरु अहिले पार हुनलागेका छन्। हिन्दू-धर्ममा हिजआजका अर्थमा उहिल्यै साम्राज्यवादिता रहेको भए ता पनि एक त त्यो युग बितिसकेको छ, यसकारण र अर्को उसले कि त आफैले विचार राम्ररी गरेर कि त कालचक्रको गतिका अधीनमा परेर त्यसलाई त्यागि सकेको छ। यहाँ अंहिसा भावको प्रधानता हुनाले शस्त्रास्त्रको प्रयोग केही जातिहरुसम्म सीमित रहयो र यी जातिहरुले उच्च कोटिका

19.6.1924, पृष्ट 276-277, खंड—24, गान्धी वाङ्मय

आध्यात्मवादी विद्वान् र त्यागीहरुका अनुशासनमा हिड़्नु संधै आफ्नो धर्म ठाने। यसकारण समाजका रूपमा हिन्दूहरुसित ती मानसिक उपकरण छैनन्, जुन लड़ाई-झगड़ाका निंति आवश्यक हुन्छन्। तर आफ्ना आध्यात्मिक प्रशिक्षणलाई अक्षुष्ण राख्न नसकेका कारणले उनीहरुले शस्त्रका सट्टामा अरू कुनै उपयुक्त साधनको प्रयोगलाई विर्से र शस्त्रका उपयोग-विधि नजानेका र त्यसप्रति रूचि नभएको कारणले तिनीहरुमा भीरूवा र दब्बुपना कहलाइन सकिने नम्रता आयो। यसरी यो दुर्गुण उनीहरुका सौजन्यको एउटा स्वाभाविक परिणाम बन्न पुग्यो।

यस्तो मत हुदाँ-हुँदै पनि हिन्दूहरुको मर्यादाको बानीलाई-त्यो नराम्रो त हो नै – उनीहरुका भीरुवासित कुनै विशेष सम्बन्ध रहेको छ भन्ने मेरो धारणा छैन। आत्मरक्षाको निंति अखाड़ाहरुको उपयोगमा मेरो विश्वास नभएको कारण पनि यही हो। शारीरिक बल बढ़ाउनका लागि तिनको उपयोगितालाई म अवश्य मान्छु, तर आत्म-रक्षाका निंति त आध्यात्मिक शिक्षा-दीक्षालाई नै पुनरुज्जीवित गर्नु म मन पराउँछु। आत्म रक्षाको सबभन्दा राम्रो र स्थायी साधन हो आत्मशुद्धि। म यी झुठा डरहरुसित डराउँदिनँ। हिन्दूहरुले आत्मविश्वास राखेर आफ्ना परम्परा अनुसार आचरण गरिरहे उनीहरुले गुण्डापनसित डराइ राख्नु पर्ने कुनै आवश्यकता रहँदैन। उनीहरुले जुन समयदेखि वास्तविक आध्यात्मिक शिक्षा-दीक्षा फेरि अप्नाउँछन्, त्यसै समयदेखि मुसलमानहरुका मनमा त्यसको असर पर्न थाल्छ, नपर्ने त कुरै छैन। मसित केही यस्ता हिन्दू युवकहरुको, जो आफैमाथि भरोसा राख्दछन् र यसकारण मुसलमानहरुमाथि पनि विश्वास राख्छन्, एउटा दल भएको भए त्यो दल कमजोर मानिसहरुका निंति ढाल बन्ने थियो। अरुलाई नमारी कसरी मर्न सकिन्छ, त्यो कुरा ती हिन्दू युवकहरुले सिखाउने छन्। मेरो विचारमा अरु उपाय छँदै छैन। हाम्रा पूर्वजहरुमाथि संकट आइपर्दा उनीहरु तपस्या – आत्म-शुद्धि गर्ने गर्दथे। उनीहरु शरीरलाई असमर्थ ठानेर दीन भावले परमेश्वरसित प्रार्थना गर्दथे र त्यस समयसम्म गृर्दथे, जबसम्म उनी उनीहरुका आह्वान सुनेर दौड़ेर आउनु बाध्य हुदैनथे। तर यस विषयमा मेरा हिन्दू मित्रहरुले भन्नेछन् – हो, तर ईश्वरले त अवतारहरुलाई धनुष-वाण वा सुदर्शन-चक्रहरु दिएर पठाए। म यस कुराका यथार्थतालाई अस्वीकार गर्दिनँ। हिन्दूहरुसित मेरो भन्नु यति मात्र छ, हिन्दू हुनाका नाताले उनीहरुले कारणलाई अवहेलना गरेर फल प्राप्त गर्न सक्तैनन्। यथेष्ट तपस्या गरिसकेपछि मात्र हामी संग्रामका निंति योग्य बन्छौं। म सोद्धछु के हामी पर्याप्त मात्रामा शुद्ध भइसकेका छौं ? व्यक्तिगत पवित्रताको कुरा त परै रहोस्, के अस्पृश्यता-सम्बन्धी आफ्ना पापसम्मको प्रायश्चित हामीले

तत्पर भावले गरेका छौं ? के हाम्रा धर्माचार्य र धर्मगुरुहरु ठीक त्यस्तै छन्, जस्तो उनीहरु हुनुपर्छ ? जबसम्म हामीहरु मुसलमानहरुका दोष खोज्नमा नै आफ्ना सम्पूर्ण शक्ति व्यय गरिरहन्छौं, तबसम्म हामीहरुले आफ्ना हातखुट्टा अधरमा नै हल्लाइ रहने छौं।



# 11

# हिन्दू-धर्मको स्थिति

हिन्दू-धर्म एउटा जीवित धर्म हो। त्यसमा तल-माथि त भई नै रहन्छ। त्यसले संसारका नियमहरुलाई नै अनुसरण गर्छ। मूलका वृक्ष त एउटै हो; तर त्यसका हाँगाहरु अनेक छन्। त्यसमा ऋतुहरुको असर पर्छ। त्यसमा वसन्त पनि हुन्छ, हेमन्त पनि, शरद ऋतु पनि हुन्छ र ग्रीष्म ऋतु पनि। त्यो वर्षाबाट पनि अप्रभावित रहँदैन। त्यसको लागि शास्त्र छन् पनि, छैनन् पनि। त्यसको आधार एउटै धर्म-पुस्तक होइन। 'गीता' सर्वमान्य छ, तर त्यो मार्ग-दर्शक मात्र हो। रूढ़िहरुमा त्यसको असर औधि कम्ति पर्छ। हिन्दू-धर्म गंगाको प्रवाह हो। त्यो मूलमा शुद्ध छ। त्यसको मार्गमा मलिनता आउँछ, तै पनि जसरी गंगाको प्रवृत्ति अन्त्यमा पोषक हुन्छ, त्यस्तै हिन्दू-धर्मको प्रवृत्ति पनि अन्ततः पोषक छ। प्रत्येक प्रान्तमा त्यसले प्रान्तीय स्वरूप ग्रहण गर्छ, तै पनि त्यसमा एकता त छ नै। रूढ़ि धर्म होइन। रूढ़िमा परिवर्त्तन हुन्छ, तर धर्म-सूत्र त जस्ताको तस्तै रहन्छ।

हिन्दू-धर्मको शुद्धता हिन्दूहरुका तपश्चर्यामा निर्भर गर्छ। जब जब धर्ममाथि संकट आइपर्छ, तब-तब हिन्दू-धर्मावलम्बीहरुले तपस्या गरेका छन्, त्यसका मलिनताका कारण खोजेका छन् र निदान निकालेका छन्। त्यसका शास्त्रहरुमा वृद्धि भइनै रहन्छ। 'वेद', 'उपनिषद्', 'स्मृति', 'पुराण' र इतिहास आदिको एकैचोटि एउटै समयमा सृजना भएको होइन; तर प्रसंग आइपर्दा नै विभिन्न ग्रन्थहरुको सृष्टि भएको हो। त्यसकारण तिनीहरुमा परस्पर विरोधी कुराहरु पनि पाइन्छन्। तिनीहरुमा शाश्वत सत्य होइन, तिनीहरुका समयमा शाश्वत सत्यको आचरण

7.2.1926, पृष्ट 436-439, खंड—29, गान्धी वाङ्मय

कसरी हुन्थ्यो, त्यो देखाइएका छन्। त्यस समय जस्तो आचरण गरिएको थियो, त्यस्तै आचरण अर्को समयमा पनि गरिए त हामी निराशाका कूवामा डुब्ने छौं। कुनै समयमा हामीकहाँ पशु-यज्ञ हुन्थ्यो, के त्यस कारणले आज पनि हामी त्यसै गरौं ? कुनै समयमा हामी मांसाहार गर्थ्यौं, त्यस कारण आज पनि हामीले त्यसै गर्नुपर्छ ? कुनै समयमा चोरहरुका हात-खुट्टा काटिन्थे, के आज पनि हामीले तिनीहरुका हात-खुट्टा काटिदिने? कुनै समयमा हामीकहाँ बहुपति-प्रथा थियो, आज पनि हामी त्यसै गर्नसक्छौं ? कुनै समयमा हामी ससाना बालिकाहरुको विवाह गरिदिन्थ्यौं, के आज पनि हामी त्यसै गरौं ? कुनै समयमा हामीहरुले केही मानिसहरुलाई तिरस्कृत मानेका थियौं, के त्यस कारण हामी आज तिनीहरुका सन्तानहरुलाई पनि तिरस्कृत नै मानौं ?

हिन्दू-धर्मले जड़ बन्नु स्पष्ट अस्वीकार गर्दछ। ज्ञान अनन्त छ, सत्यको सीमा कसैले खोजेर पाएको छैन। आत्माका शक्तिको नयाँ-नयाँ शोधहरु भइरहन्छन् र भइरहनै छन्। हामीहरु अनुभवका पाठ पढ़दै अनेक प्रकारका परिवर्तनहरु गरिरहने ? सत्य त एउटै छ, तर त्यसलाई सम्पूर्ण रूपले कसले जान्नसकेको छ ? 'वेद' सत्य हो, 'वेद' अनादि छ र पनि त्यसलाई पूर्णतया कसले चिन्न सकेको छ ? आज न 'वेद' का नाउँले प्रख्यात छ, त्यो त 'वेद' को करोड़ौं भाग पनि होइन। जुन हामीहरुसित छ, त्यसको अर्थ पनि पूर्णतया कसले जानेको छ?

यति ठूलो जाल हुनाको कारणले त ऋषिहरुले हामीहरुलाई एउटा ठूलो कुरा सिखाएका छन्, 'यथा पिण्डे तथा ब्रह्माण्डे'। ब्रह्माण्डको पृथक्करण असंभव छ। आफ्नो पृथक्करण गर्नु शक्य छ। र आफैलाई चिन्नसके सारा संसारलाई चिन्न सकिन्छ। तर आफूलाई चिन्नका निंति प्रयत्न गर्नु आवश्यक छ। र त्यो प्रयत्न निर्मल हुनुपर्छ। निर्मल हृदय बिना प्रयत्न निर्मल हुनु असंभव छ। यम-नियम आदिका पालन बिना हृदयको निर्मलता पनि संभव छैन। ईश्वरका कृपा विना यम-नियमादिको पालन कठिन छ, श्रद्धा औ भक्ति बिना ईश्वरको कृपा प्राप्त हुनु सक्तैन। यसैले तुलसीदासले रामनामको महिमा गाएका छन् र भागवतकारले द्वदशाक्षरमन्त्र सिखाएका छन्। जसले हृदयदेखि यसका जप गर्छन्, तिनीहरु नै सनातनी हिन्दू हुन्।

बाँकी सबै त अखा भगतका भाषामा 'अन्ध कूप' हुन्।

अब लेखकका शंकाहरुमाथि विचार गरौं। यूरोपीयहरु हाम्रा रीति-थितिलाई हेर्छन्, तर म त्यसलाई अध्ययन जस्तो सुन्दर नाँउ दिन्नँ। तिनीहरु त तिनलाई

आलोचना गर्ने दृष्टिले मात्र हेर्छन्, त्यसकारण म आफ्नो धर्म तिनीहरुबाट सिक्न सक्तिनँ।

तर हिन्दू-धर्मको पारसीमा खादचाखादचमा नै छैन। त्यस भन्दा अनन्त कोटि धेर महत्वको कुरा अन्तराचरण हो, सत्य र अहिंसाको सूक्ष्म पालन हो। गोमांस त्याग्ने दम्भी मुनि भन्दा गोमांस खाने दयामय, सत्यमय र ईश्वरको डर मानेर काम गर्ने मानिस हजार गुणा धेर राम्रो हिन्दू हो। अनि जो सत्यवादी र सदाचारी छ, जसले गोमांस आदिको आहारमा हिंसा देख्दछ, जसले त्यसलाई त्यागेको छ तथा जसले जीव-मात्रप्रति दया-भाव राख्छ, उसलाई त हाम्रो कोटिशः नमस्कार छ। उसले त ईश्वरलाई देखेको छ, चिनेको छ, उ परमभक्त हो, उ जगद्गुरू हो।

आज हिन्दू धर्म र अरु धर्मको परीक्षा भइरहेछ। सनातन सत्य एउटै हो। ईश्वर पनि एउटै छन्। लेखक, पाठक र हामी सबै मत-मतान्तरहरुका मोहमा नफंसेर सत्यको सरल मार्गलाई नै अनुसरण गरे हामी सनातनी हिन्दू भइरहने छौं। सनातनी मानिने धैरै मानिसहरु बरालिएका छन्। त्यसमा कसलाई स्वीकार हुन्छ, त्यो कसले जान्दछ र ! रामनाम लिने धैरै मानिस थंको लाग्नेछन् र चुपचाप रामका काम गर्ने थोरै मानिसहरुले विजयमाला लाउनेछन्।

[गुजरातीबाट]

नवजीवन, 7.2.1926



12

# अस्पृश्यतारूपी रावण

हामीले आफ्ना आजका स्थितिमा ती कथाहरुका अभिप्राय नबुझे पुराणहरुका केही कथाहरुलाई अत्यन्तै डरलाग्दो भन्न सकिन्छ। हामीले आफ्ना जीवनलाई शास्त्रहरुमा भनिएका हरेक साना-ठूला कुरा अनुसार बनाए वा तिनमा वर्णित पात्रहरुलाई ठीक-ठीक अनुसरण गर्न लागे ती शास्त्र हाम्रा लागि प्राणघातक, जाल नै बन्ने छन्। हामीहरु यिनीहरूबाट केवल सिद्धान्तका मुख्य-मुख्य कुरा स्पष्ट गर्न वा तिनलाई ठीक-ठीक बुझ्न सहायता पाइन्छ। कुनै धार्मिक ग्रन्थमा कोही प्रसिद्ध पुरुषले कुनै पाप गरेको उल्लेख भए के त्यसबाट हामीले पनि पाप गर्ने आज्ञा पाउँछौं ? एकपल्ट मात्र पनि उनीहरुले हामीलाई यो भनिदिए – यो संसारमा खालि सत्यको नै अस्तित्व छ र सत्य परमेश्वरतुल्य छ – हाम्रा लागि यथेष्ट हुन्छ। युधिष्ठिरलाई पनि झूठा बोल्नुपरेको थियो भन्नु अनुपयुक्त हुनेछ। यसो भन्नु बरु धेर उपयुक्त हुन्छ, जब उनले झूठा बोले, उनले त्यसै समय, त्यसै क्षण कष्ट भोग्नु परयो र उनको प्रसिध्दि र समाजमा भएको ठूलो स्थानले पनि कुनै बाधा दिन सकेन। त्यसरी नै हाम्रो यो भन्नु पनि अप्रस्तुत हुँदैन, आदि शंकराचार्यले कोही चाण्डाललाई टाढ़ा बस्न लगाएका थिए। हामीले यति जानि राख्नु नै यथेष्ठ हुन्छ, जुन धर्मले प्राणी मात्रसित आत्मोपम व्यवहार गर्न सिखाउँछ, त्यो धर्मलाई कुनै तुच्छ जीवप्रति निष्ठुर व्यवहार गर्नु असहय हुन्छ; पूर्णतः निर्दोष मानिसहरुको एउटा पूरै समाजको कुरा त नगरे पनि हुन्छ। यसबाहेक आदि शंकराचार्यले के

---

29.7.1926, पृष्ट 220-221, खंड—31, गान्धी वाङ्मय

गरे, के गरेनन्, सबै कुरा हामीले जानेका छैनौ र थाहा पनि छैन। यहाँ चाण्डाल शब्द कुन अर्थमा व्यवहार गरिएको हो, त्यस बारे हामीलाई अझ थोरै मात्र थाहा छ। यो त सबै मान्छन्, यसका धेरै अर्थ छन्, जसमध्ये एउटा अर्थ हो पापी। सबै पापीहरुलाई छुत मान्नु हो भने हामी सबै अछुत बन्नेछौं भन्ने भय छ र स्वयं हाम्रा पण्डितज्यू पनि यसबाट बाच्न सक्तैनन्। अस्पृश्यताको प्राचीनतालाई कसैले अस्वीकार गर्दैन, तर यसलाई दोष हो भन्ने मान्नु हो भने त फेरि प्राचीनताका नाउँमा यसलाई समर्थन गर्न सकिन्न।



13

# तुलसीदासज्यू

रामायणलाई तपाईं सर्वोत्तम ग्रन्थ मान्नु हुन्छ, किन, त्यो चाँहि बुझिएन। हेर्नोस, तुलसीदासज्यूले स्त्री-जातिको कति निन्दा गरेका छन्। बालि-बधलाई कति समर्थन गरेका छन्। यस्तो ग्रन्थमा तपाईं कस्तो सौन्दर्य देख्नुहुन्छ ? तुलसीदासज्यूको काव्य-चातुर्यका निंति रामायणलाई सर्वोत्तम ग्रन्थ मान्नु भएको त होइन ? यसो हो भने त तपाईंलाई काव्य-परीक्षा गर्ने कुनै अधिकार छैन।

उपरोक्त प्रश्न एकैजना मित्रका होइनन्, भिन्न-भिन्न मित्रहरुले भिन्न-भिन्न अवसरमा जे भने (लेख) यी तिनका सार हुन्। यस्ता एक-एकवटा कुरालाई लिएर हेरे, साराका सारा रामायण-दोषमय सिद्ध गर्न सकिन्छ। सन्तोष यति छ – यसरी प्रत्येक ग्रन्थ र प्रत्येक व्यक्तिलाई दोषमय सिद्ध गर्न सकिन्छ। एकजना चित्रकारले आफ्ना टीकाकारहरुलाई उत्तर दिनका निंति आफ्नो चित्र एउटा प्रदर्शनीमा राखे र मुनि यसरी लेखे – 'यो चित्रमा जसलाई जुन ठाउँमा दोष भएको लाग्छ, उनले त्यो ठाउँमा कलमले चिन्ह लगाइदेऊन्। परिणाम-स्वरूप चित्रका अंग-प्रत्यंग नै दोषपूर्ण देखाइए। तर वास्तवमा त्यो चित्र अत्यन्त कलायुक्त थियो। टीकाकारहरुले त वेद, बाइबल र कुरानमा पनि अनगन्ती दोषहरू देखाएको छन्, तर ती ग्रन्थहरुका भक्त तिनमा दोषहरुको अनुभव गर्दैनन्। प्रत्येक ग्रन्थको परीक्षा सम्पूर्ण ग्रन्थको मर्म हेरेर गर्नुपर्छ। यो बाह्य परीक्षा हो। अधिकांश पाठकहरुमा

---

10.10.1929, पृष्ट 589-591, खंड—41, गान्धी वाङ्मय

ग्रन्थ विशेषको कस्तो असर परेको छ, त्यो हेरेर ग्रन्थको अन्तरिक परीक्षा गरिन्छ। जुनै साधनद्वारा हेरे पनि रामायणको श्रेष्ठता नै सिद्ध हुन्छ। ग्रन्थलाई सर्वोतम भन्नुको अर्थ त्यसमा एउटा पनि दोष छैन भन्ने कदापि होइन। तर रामचरितमानसका सम्बन्धमा दृढ़तापूर्ण कथन छ, त्यसबाट लाखौं मानिसहरुले शक्ति पाएका छन्। ईश्वर-विमुख मानिसहरु यसका पारायणले ईश्वर-सम्मुख भएका छन् र आज पनि भइरहेका छन्। मानसको प्रत्येक पृष्ठ भक्तिले परिपूर्ण छ। मानस अनुभवजन्य ज्ञानको भण्डार हो।

यो कुरा ठीक हो, पापीहरु आफ्ना पापका समर्थनका निंति रामचरितमानसका सहारा लिन्छन्। तर यसबाट यो सिद्ध हुँदैन, मानिसहरुले रामचरितमानसबाट केवल पापका पाठ मात्र सिख्छन्। म स्वीकार गर्छु, तुलसीदासज्यूले स्त्रीहरुमाथि अनिच्छाले अन्याय गरेका छन्। यसमा र यस्तै अन्य कुरामा तुलसीदासज्यू सुधारक होइनन्, भक्त-शिरोमणि थिए। यी कुराहरुमा हामी तुलसीदासज्यूका दोषहरुको होइन तर उनका युगका दोषहरुका दर्शन अवश्य गर्छौं।

यस्तो दशामा सुधारकले के गर्ने ? उसले तुलसीदासबाट केही सहायता पाउन सक्ला ? अवश्य पाउन सक्छ। रामचरितमानसमा स्त्री जातिका निन्दा धेरै पाइन्छन्, तर त्यसै ग्रन्थबाट सीताज्यूको पुनीत चरित्रको पनि हामी परिचय पाउँछौं। बिना सीताका राम के ? रामको यश सीताज्यूमाथि निर्भर छ। सीताज्यूको रामज्यूमाथि होइन। कौशल्या, सुमित्रा आदि पनि मानसका पूजनीय पात्राहरु हुन्। शबरी र अहल्याका भक्ति आज पनि सराहनीय छन्। रावण राक्षस थियो, तर मन्दोदरी सती थिइन्। यस्ता अनेकन् दृष्टान्त यो पवित्र भण्डारमा पाइन्छन्। मेरो विचारमा यी सब दृष्टान्तहरुले यही सिद्ध गर्छन् – तुलसीदासज्यू ज्ञानपूर्वक स्त्री - जातिका निन्दक थिएनन्। ज्ञानपूर्वक न उनी स्त्री-जातिका पुजारी नै थिए। यी त स्त्रीहरुका कुरा भए।

तर बालि-बध आदिका बारेमा पनि दुइवटा मतहरुलाई स्थान छ। विभीषणमा त म कुनै दोष पाउँदिनँ। विभीषणले आफ्ना दाज्यूसित सत्याग्रह गरेका थिए। विभीषणका दृष्टान्तले हामीलाई सिखाउँछ – आफ्ना देश वा शासकका दोषहरुप्रति सहानुभूति राख्नु वा तिनलाई लुकाउनु देशभक्तिका नाउँलाई लाज पार्नु हो, यसका विपरीत देशका दोषहरुलाई विरोध गर्नु साँचो देशभक्ति हो। विभीषणले रामज्यूको सहायता गरेर देशको हित नै गरेका थिए। सीताज्यूप्रति रामचन्द्रको व्यवहारमा निर्दयता थिएन, त्यसमा राजधर्म र पतिप्रेमको द्वन्द्वयुद्ध थियो।

• जस-जसका मनमा यो सम्बन्धमा शुद्ध भावले शंकाहरु उठ्छन्, उनीहरुलाई मेरो सल्लाह छ – उनीहरुले मेरा वा अरू कसैका अर्थलाई यन्त्रवत् स्वीकार नगरून्। जुन विषयमा हृदय शंकित छ, उनीहरुले त्यसलाई छोड़ि दिऊन्। सत्य, अहिंसादिका विरोधी कुनै कुरालाई स्वीकार नगरून्। रामचन्द्रले छल गरेका थिए, यसकारण हामी पनि छल गरौं, यस्तो विचार गर्नु उल्टो पाठ पढ्नु हो। रामादिले कहिल्यै छल गर्न सक्तैनन् भन्ने विश्वास राखेर हामीले पूर्ण पुरूषको नै ध्यान गर्नुपर्छ र पूर्ण ग्रन्थको नै पठन-पाठन गर्नुपर्छ। तर 'सर्वारम्भा हि दोषेण धूमेनाग्निरिवावृता' न्यायानुसार सबै ग्रन्थ दोषपूर्ण छन् – यो सम्झेर हंसवत् दोषरूपी नीरलाई निकालेर फालून् र गुणरुपी क्षीर नै ग्रहण गरून्। यसरी अपूर्णमा सम्पूर्णको प्रतिष्ठा गर्नु, गुण-दोषलाई पृथक्करण गर्नु सँधै व्यक्तिहरु र युगहरुका परिस्थितिमा निर्भर गर्छन्। स्वतन्त्र सम्पूर्णता ईश्वरमा नै छ र त्यो अकथनीय छ।

हिन्दी नवजीवन, 10.10.1929



14

# बातचीत : बेसिल मेथ्युज आदिसित

श्री मेथ्युज यो जान्न उत्सुक थिए – के गान्धीज्यू कुनै आध्यात्मिक साधन गर्छन् र कस्तो किसिमको अध्ययनलाई उनले विशेष रूपले सहायक पाएका छन् !

गा० : योग-साधन म जान्दिनँ। म जुन साधना गर्छु, त्यो मैले सानो छँदा आफ्नी धाईबाट सिखेको थिएँ। मलाई भूत-प्रेतसित डर लाग्दथ्यो। उ मलाई भन्थी, 'भूत-प्रेत हुँदैन, तर तिमीलाई डर लागे राम-नाम जप'। बालक कालको यो शिक्षाले मेरो अन्तर्मनमा एउटा विराट रूप लियो। यो एउटा यस्तो सूर्य हो, जसले गहनतम अन्धकारका मेरा घडीहरुलाई आलोकित गरेका छन्। यस्तै प्रकारको सान्त्वना ईसाईले यीशुका नाउँ र मुसलमानले अल्लाहका नाउँ जप्नाले पाउन सक्छन्। यी सब चीजका एउटै प्रकारका फलितार्थ हुन्छ र एउटै जस्तो परिस्थितिमा यिनका एउटै जस्ता परिणाम हुन्छन्। शति यति छ, जप केवल ओठबाट होइन, आफ्ना अन्तरबाट हुनुपर्छ। सहायक अध्ययनको जहाँसम्म प्रश्न छ, हामी भागवत्‌गीताको नियमित रूपले पाठ गर्छौं र अब त स्थिति यस्तो भइसकेको छ, प्रतिदिन बिहान केही अध्यायहरुका पाठ गर्दै एक हप्तामा हामी पूरा 'गीता' पाठ गरि सक्छौं। फेरि भारतका विभिन्न सन्तहरुका भजन हुन्छन् र त्यसमा हामी ईसाई भजनहरुलाई पनि सम्मिलित गर्छौं। खान साहेब हामीसित छन्, त्यसकारण हामी कुरानका आयतहरु पनि पढ्छौं। हामी सबै धर्मको समानतामा विश्वास गर्छौं। तुलसीकृत

---

5.12.1936, पृष्ट 85-86, खंड—64, गान्धी वाङ्मय

रामायणका पाठले मलाई सबभन्दा बढ्ता शान्ति दिन्छ। न्यु टेस्टामेन्ट र कुरानका पाठबाट पनि म शान्ति पाउँछु। म तिनलाई आलोचकका दृष्टिले हेर्दिनँ। ती मेरा लागि 'भागवत्‌गीता' जति कै महत्वपूर्ण छन्, यद्यपि तिनका प्रत्येक कुराले, उदाहरणका निंति पौँलका धर्म-पत्रहरुका प्रत्येक कुराले, मलाई अपील गर्दैन। तुलसीदासका प्रत्येक कुराले पनि मलाई अपील गर्दैन। 'गीता' एउटा यस्तो विशुद्ध धर्मोपदेश हो, जसमा कुनै दोष छैन। त्यो त परमात्मातिर जीवात्माको यात्राको वर्णन हो। यस कारण त्यसमा चयनको प्रश्न नै उठ्दैन।

मे० : तपाई वस्तुतः प्रोटेस्टेन्ट हुनुहुन्छ।

गा० : म के हुँ र के होइनँ, मलाई थाहा छैन। श्री हँजले मलाई प्रेस-बिटैरियन भन्लान्।

मे० : सत्यको अन्तिम प्रमाणको आधार तपाईं कहाँ पाउनु हुन्छ ?

गा० : त्यो यहाँ (आफ्ना हृदयतिर देखाएर) छ। प्रत्येक धार्मिक ग्रन्थका बारेमा, 'गीता' का बारेमा पनि, म आफ्नो विवेकलाई काममा लाउँछु। धार्मिक ग्रन्थको कुनै पनि वचनलाई म आफ्नो विवेकलाई प्रभाव पार्न दिन्नँ। म त यो मान्छु, प्रमुख धर्म-ग्रन्थ ईश्वर-प्रेरित छन्, तर त्यसका साथै म यो पनि जान्दछु, ती दुइवटा माध्यमहरु बाट छानिएर आउँछन्। पहिले त ती कोही मानव सन्देशवाहकका माध्यमबाट आउँछन् र फेरि व्याख्याकारहरुका टीकाहरुबाट निस्कन्छन्। तिनमा यस्तो केही पनि हुँदैन, जुन सीधै ईश्वरबाट आएको हुन्छ। मेथ्युजले एउटै पाठको एउटा रूप र जौनले अर्को रूप राख्न सक्छन्। दिव्य ज्ञानमा विश्वास हुँदा-हुँदै पनि म आफ्नो विवेकलाई तिलांजलि दिन सक्तिनँ। र सबभन्दा ठूलो कुरा त यो छ, 'शब्दले मार्छ, तर त्यसको निहितार्थले तार्छ'। तर तपाईले मलाई भूल नबुझ्नु होला। मेरो आस्थामा यस्ता कुरामा पनि विश्वास छ, जसमा तर्कका निंति कुनै स्थान छैन; जस्तो कि ईश्वरका सत्तामा। कुनै पनि तर्कले मलाई त्यो आस्थांबाट हटाउन सक्तैन। र त्यो बालिका जस्तो, जसले सम्पूर्ण तर्कको प्रतिकूल बारम्बार यही भनिरही, 'फेरि पनि हामी सात जना छौं', म कुनै धेरै बुद्धिमान् व्यक्तिबारे तर्कमा पराजित भएर पनि बारम्बार यही भन्छु, 'तै पनि ईश्वर छन्'।

[अंग्रेजीबाट]

हरिजन, 5.12.1936



15

# भेट : एम. सी. राजासित

विशुद्धतम हिन्दू-धर्मको दृष्टिमा त ब्राह्मण, कमिला, हात्ती र श्वपच (कुकुरको मासु खाने) सबैको एउटै दर्जा छ हाम्रो र दर्शन यति उच्च मानसिक धरातलको छ र हामी त्यस अनुसार काम गर्न असमर्थ रहेका छौं। यसकारण त्यही दर्शनले आज हाम्रा बीचमा सडाँध उत्तम गर्न लागेको छ। हिन्दू-धर्मले सम्पूर्ण मानवको मात्र होइन कि समस्त जीवहरुमा बराबरीको भावनाको आग्रह राख्छ। यो एउटा यस्तो संकल्पना हो यसलाई बुझ्न खोज्दा मगज खल्बलिएर आउँछ, तर हामी त्यो स्तरसम्म माथि पुग्न सक्नु पर्छ। मानिस-मानिसको बीचमा एउटा वास्तविक, जीवन्त समानता स्थापित हुनासाथ हामी मानिस र समस्त ब्रह्माण्डका बीचमा समानता स्थापित गर्न समर्थ हुनेछौं। त्यो दिनको उदय हुनसाथ हाम्रो धरतीमा शान्ति अनि पारस्परिक मानवीय सद्भावना प्रतिष्ठित हुनेछ।

---

28.3.1936, पृष्ट 299-300, खंड—62, गान्धी वाङ्मय



16

# भाषण : क्विलोनमा

अब अलिकति यी कुरामाथि विचार गरौं - हिन्दू - धर्मको मर्म के हो, त्यो कुन चौंहि चीज हो जसबाट ती अनेकौं सन्त-महात्माहरुले प्रेरणा पाए, जसको उल्लेख इतिहासमा भएको छ। यसले संसारलाई यति धेरै तत्व चिन्तकहरु दिएको कारण के हो? हिन्दू-धर्ममा त्यस्तो के छ र यसका भक्तहरु शताब्दीयौंदेखि यसमा उत्सर्ग हुँदै आएका छन्? यसमा अस्पृश्यता भएको देख्दा-देख्दै पनि उनीहरु यसमा किन मरिमेटेका हुन्? अस्पृश्यता-विरोधी संघर्षको प्रक्रियामा अनेकौं कार्यकर्ताहरुले मसित हिन्दू-धर्मका सार-तत्व जान्न चाहेका छन्। उनीहरुको भनाइ छ, हामीसित न त इस्लामको जस्तो कुनै 'कलमा' छ औ न बाइबलमा जस्तो, 3-16 सेन्ट जोनमा ईसाई धर्मका केन्द्रीय मान्यताको उल्लेख भएको छ, त्यस्तो केही पनि छैन। उनीहरु सोध्छन्, हामीकहाँ यस्तो कुनै वस्तु छ कि छैन, जसले अत्यन्त चिन्तनशील र दुनियादारीमा लागेका – दुवै किसिमका हिन्दूहरुलाई सन्तुष्ट गर्न सक्तछन् ? केही मानिसहरुको भनाइ छ – र यो अकारण पनि छैन – गायत्री मन्त्र यस्तै छ। मैले 'गायत्री मन्त्र' को अर्थ बुझेर हजारौंपल्ट त्यसको जाप गरेको छु। तर मलाई अझ पनि त्यो मन्त्रले मेरो सम्पूर्ण आध्यात्मिक पिपासालाई तृप्त गर्न सकेको जस्तो लागेको छैन। फेरि, तपाईहरुलाई थाहै छ, वर्षौंदेखि म 'भगवद्गीता' को भक्त रहेको छु भनेको छु, यसबाट आफ्ना सबै समस्याहरुका समाधान मैले पाउँदै आएको छु र शंका तथा कठिनाइका सैकड़ौं प्रसंगहरुमा

---

30.1.1937, पृष्ट 287-291, खंड—64, गान्धी वाङ्मय

यसले मेरो निंति कामधेनु, मार्गदर्शक र सहायकको काम गरेको छ। आफूलाई निराश हुनु परेको कुनै प्रसंगको मलाई सम्झना छैन। तर म यहाँ उपस्थित सबै श्रोताहरुका सामु त्यसलाई स्वीकार्य राख्न सकिने पुस्तक होइन। प्रार्थनापूर्ण मनले यसका गहन अध्ययन-मननका उपरान्त नै आत्माका निंति यसका पयोधरमा संचित परम पौष्टिक दूध हामीलाई प्राप्त हनुसक्छ।

तर एउटा मन्त्र यस्तो अवश्य छ, जसमा मैले हिन्दू-धर्मका समस्त सार समाविष्ट भएको मानेको छु। त्यही मन्त्र म तपाईंहरुलाई सुनाउन लागिरहेको छु। मेरो धारणा छ, तपाईंहरुमध्ये धेरैलाई 'ईशोपनिषद्' बारेमा ज्ञान छ। वर्षौ पहिले यसलाई मैले अनुवाद र टीकासहित पढ़ेको थिएँ। यरवदा जेलमा मैले यसलाई कंठस्थ गरेको थिएँ। तर त्यस बेला म यसमा त्यस्तो प्रकारले मुग्ध भएको थिइनँ, जस्तो प्रकारले यताकेही महीनामा भएको छु। जम्मै उपनिषद् र हाम्रा अन्य सबै धर्म-ग्रन्थहरु अकस्मात् नष्ट भए र 'ईशोपनिषद्'को पहिलो श्लोक मात्र हिन्दूहरुका स्मृतिमा कायम रहे पनि हिन्दू-धर्म सँधै जीवित रहनेछ भन्ने अब म अन्तिम रूपले निष्कर्षमा पुगेको छु।

यो मन्त्र चार भागमा विभक्त छ। पहिलो भाग हो 'ईशावास्यमिंद सर्वं यत्किंच जगत्यां जगत्। म यसको अर्थ यसरी लगाँउछु -- विश्वमा हामी जे-जति देख्छौं, सबमा ईश्वरको सत्ता व्याप्त छ। अनि दोस्रो अनि तेस्रो भाग यस्तो छ -- 'तेन त्यक्तेन भुंजीयाः'। यिनलाई दुइ भागमा विभक्त गरेर अनुवाद यसरी गर्छु -- यसलाई त्याग गर र यसलाई भोग गर। यसको एउटा अर्को अनुवाद पनि छ -- यद्यपि त्यसको अर्थ पनि प्रायः त्यही हो। त्यो दोस्रो अनुवाद हो : उसले तिमीलाई जे-जति दिन्छ, त्यसलाई भोग गर। यो अनुवादको दृष्टिले पनि यसलाई दुई भागमा विभक्त त गर्न सकिन्छ। यसपछि आउँछ यसको अन्तिम र महत्वपूर्ण भाग -- 'मा मृधः कस्यस्विद्धनम्।' यसको मतलब हो, कसैको सम्पत्तिलाई लोभको दृष्टिले नहेर। यो प्राचीन उपनिषद्का बाँकी सबै मन्त्र यही प्रथम मन्त्रका भाष्य हुन् वा यसो मनौं, तिनीहरुमा यसैको पूरा अर्थ उद्घाटित गर्ने प्रयत्न गरिएको छ। जब म यो मन्त्रलाई 'गीता' लाई ध्यानमा राखेर पढ़्छु, तब 'गीता' पनि यसै मन्त्रको भाष्य हो भन्ने मलाई त लाग्छ, यो मन्त्रले समाजवादीहरु र साम्यवादीहरु, तत्वचिन्तकहरु र अर्थशास्त्रीहरु सबैलाई समाधान गरिदिन्छ। जो मानिस हिन्दू-धर्मका अनुयायी होइनन्, उनीहरुलाई म यसो भन्ने घृष्टता गर्छु, यसले उनीहरु सबैलाई पनि समाधान गर्छ। र यो कुरा ठीक हो, ठीक हो भनेर त म मान्छु नै, भने फेरि तपाईलाई हिन्दू-धर्मको यस्तो कुनै चीजलाई महत्व दिने आवश्यकता

छैन, जुन यो मन्त्रको अर्थसित मेल खाँदैन वा यसको विरूद्ध छ। कोही पनि साधारण मानिसले योभन्दा धेर के जान्न चाहला – एउटै ईश्वर र जीव मात्रको एउटै स्रष्टा र नियन्ता विश्वको कण-कणमा व्याप्त छ।

यो मन्त्रका तीन भाग सीधै पहिलो भागमध्येबाट फलित हुन्छन। ईश्वर आफ्ना समस्त सृष्टिमा व्याप्त छन् भन्ने तपाईं मान्नु हुन्छ भने तपाईले यो पनि मान्नु पर्छ, तपाईंले यस्तो कुनै वस्तु उपभोग गर्नु सक्नु हुन्न, जो उनले दिएका छैनन्। उनी आफ्ना असंख्य सन्तानहरुका स्रष्टा हुन् भन्ने देखिसकेपछि यो त स्पष्ट नै छ, तपाई कसैका सम्पदालाई लाभका दृष्टिले हेर्न सक्नु हुन्न। उनका सृष्टिका असंख्य प्राणीहरुमध्ये तपाई पनि एकजना हुनुहुन्छ भन्ने तपाई सम्झनु हुन्छ भने सब थोक त्यागेर ती सब उनका चरणमा अर्पित गर्नु तपाईको धर्म हुनुजान्छ। यसको तात्पर्य हो, त्यागको यो काम मात्र स्थूल त्याग होइन, अर्को वा नयाँ जन्मको प्रतीक हो। यो कुनै अज्ञानजनित होइन, विचारपूर्वक गरिएको काम हुन जान्छ। यस कारण यो एउटा नवजीवन बन्छ। देहधारीलाई भोजन, पानी र वस्त्र चाहिन्छन् नै, त्यस कारण उसलाई जे-जस्तो वस्तुको आवश्यकता पर्छ, उसले त्यो ईश्वरसित नै माँग्छ र यी सब उसलाई आफ्ना त्यागको स्वाभाविक पुरस्कार-स्वरूप प्राप्त हुन्छ। यति पर्याप्त नभएको हुँदा यो मन्त्रको अन्त्यमा एउटा भव्य विचार राखिएको छ, कसैको सम्पदालाई लोभको दृष्टिले नहेर। या शिक्षालाई आफ्नी जीवनमा चरितार्थ गर्ने बित्तिकै तपाई संसारका सबै प्राणीहरुसित शान्ति तथा सौहार्दसित बस्ने बुझकी विश्व - नागरिक बन्नु हुन्छ। यसले मानिसका इहलोक र परलोकका उच्च भन्दा उच्च आकांक्षाहरुलाई तृप्त गरिदिन्छ।



17

# भाषण : हरिपादमा

गत राति क्विलोनको सभामा मैले हिन्दू-धर्मका सन्देशको कुरा गरेथें। यो सभामा पनि म तपाईंहरुलाई त्यसैका सम्बन्धमा केही भन्न तपाईहरुका केही समय लिन चाहन्छु। त्यो सभामा मैले यो भन्ने घृष्टता गरेको थिएँ, 'ईशोपनिषद्' को मन्त्रमा हिन्दू-धर्मको सार निहित छ।

ईशावास्यमिदं सर्व यत्किंच जगत्यां जगत्
तेन त्यक्तेन भुंजीया मा गृधः कस्यस्विद्धनम्।

अलिकति मात्र पनि संस्कृत जान्ने मानिसले देख्ने छन्, यसमा अन्य वैदिक मन्त्रहरुमा जस्तो केही पनि दुर्बोध छैन र यसको सोझो अर्थ यति नै हो : विश्वमा साना-ठूला जे-जति छन्, ती सबमा, सानो भन्दा सानो अणुमा पनि, ईश्वरको सत्ता व्याप्त छ – हामीले स्रष्टा वा प्रभुका रूपमा जानेका ईश्वरको। ईशको अर्थ हो शास्ता र जो स्रष्टा हुन्, तिनी स्वभावतः शास्ता त बन्छन् नै। र यो श्लोकका रचयिता ऋषिले ईश्वरकालागि शास्ताबाहेक अरू कुनै शब्दलाई प्रयोगमा त्याएका छैनन् र उनले वास्तवमा कुनै पनि वस्तुलाई उनका शासनका परिधिबाट बाहिर रहन दिएका छैनन्। उनको भनाइ छ, हामी जे-जाति देख्छौं, सबैमा ईश्वर व्याप्त छन्, र यो अवधारणाबाट स्वभावतः यो मन्त्रको शेष भाग फलित हुन्छ। तिनमा उनी भन्छन्, सब थोक त्याग गर, अर्थात् यो सानो भूतलमा जे जति छन्, त्यति मात्र होइन, तर अखिल ब्रह्मण्डमा जे-जति छन्, ती सबलाई नै त्याग

30.1.1937, पृष्ट 294-297, खंड—64, गान्धी वाङ्मय

गर'। उनले हामीलाई सब थोक त्याग गर्ने कुरा यस कारण गरेका छन्, हामीहरु वास्तवमा तुच्छ परमाणु जस्ता भएका हुनाले हामीले कुनै पनि वस्तुलाई स्वायत बनाउने विचार गरे त्यो हास्यास्पद हुन जानेछ। यसपछि ऋषि भन्छन्, यो त्यागको पुरस्कार हो 'भुंजीयाः', तिमीलाई, अर्थात्, आवश्यक भएको वस्तु उपभोग गर। तर 'भुंजीयाः' शब्दको एउटा अर्को विशेष अर्थ पनि छ, यद्यपि तपाईंहरु यसलाई 'उपयोग', 'खानु' आदिका अर्थ पनि लगाउन सक्नु हुन्छ, त्यसको विशेष अर्थ हो, जति तपाईलाई आफ्नो विकासको निंति आवश्यक छ, त्योभन्दा धेर नलिनु। यसकारण यो उपयोग वा उपयोगमा दुइवटा मर्यादाहरु लागेका छन्। एउटा त हो त्याग वा 'भागवत' का शब्दमा मन्त्र हो भने 'कृष्णार्पणामस्तु सर्वम्'। भागवत-धर्मका प्रत्येक अनुयायीलाई प्रतिदिन प्रातःकाल आफ्ना समस्त विचार, शब्द तथा कर्म (मनसा, वाचा, कर्मणा) ईश्वरलाई गर्ने आदेश छ र कुनै पनि दिन जबसम्म उसले यो त्याग वा अर्पणको काम सम्पन्न गरिसक्दैन, उसलाई कुनै पनि वस्तु स्पर्श गर्ने, पानी पिउनेसम्म पनि, अधिकार हुँदैन। र उसले त्याग र अर्पणको यो काम गरिसकेपछि त्यसका पुरस्कार-स्वरूप उसले दैनिक जीवनका निंति आवश्यक भोजन, जल, वस्त्र र आवासका उपभागको अधिकार प्राप्त गर्दछ। यसकारण उपभोग वा उपयोग त्यागको पुरस्कार हो भन्ने तपाईहरु यसको अर्थ लाउनुहोस अथवा त्याग उपभोगको शर्त हो। र त्याग स्वयं हाम्रा अस्तित्वका निंति, हाम्रा आत्माका निंति एउटा अनिवार्य आवश्यकता हो भन्ने अर्थ लाउनुहोस, कत्तिफरक पर्दैन। यो मन्त्रमा भनिएको यो शर्त पर्याप्त नभए जस्तो भएर होला, ऋषि यसका तुरन्तै पछि भन्छन् : 'कसैका सम्पदालाई लोभका आँखाले नहेर!' म तपाईंहरुसित यो भन्छु, संसारका सबै दर्शन र धर्म यो मन्त्रमा निहित छ, र जे-जति धर्मविरूद्ध छ, ती सबलाई यसमा वर्जन गरिएका छन्। धर्मग्रन्थहरुका व्याख्याका नियमहरु अनुसार जे-जति श्रुति-विरूद्ध छ - र 'ईशोपनिषद्' एउटा श्रुति नै हो –ती सबै सर्वथा त्याज्य छन्।

अब म यो मन्त्रलाई ध्यानमा राखेर यो कुरामाथि विचार गर्न चाहन्छु, राज्य द्वारा गरिएको घोषणाको संदर्भमा हाम्रो आफ्नै अवस्था कस्तो छ ! कारण, ब्रह्माण्डमा जे-जति पनि छन्, ती सबमा ईश्वर व्याप्त छन् भने अर्थात् ब्राह्मण र भंगी, पंण्डित र मेहतर, इलवा र परमा आदि सबै जातिका मानिसहरुमा उनी व्याप्त छन् भने यो मन्त्रको दृष्टिले न कोही उच्च हुन्छ और न कोही नीच, तर सबै समान हुन्छन्, किन भने सबै एउटै स्रष्टाका सृष्टि हुन्। खालि ब्राह्मण र क्षत्रीयहरुलाई मात्र यसको पात्र मानिनु पर्ने यो धर्म वा दर्शनको कुनै यस्तो

निगूढ़ तत्व छैन, तर यो द्वारा त एउटा सनातन सत्य उद्घाटित भएको छ, जसमा कसैलाई केही कमि गर्ने वा कसैलाई कुनै प्रकारले मर्यादित गर्ने सुविस्ता प्राप्त छैन। यसकारण स्वयं महाराजा वा महारानी पनि त्रावणकोरको कोही पनि व्यक्तिभन्दा जौंभरि पनि उच्च छैनन्। हामी सबै ईश्वरका सन्तान, उनैका सेवक हौं। महाराजा साहेब सबै समान मानिसहरुका बीचमा सर्वप्रथम छन् भने-र तिनी वास्तवमा सर्वप्रथम छन् पनि – तिनी आफ्ना राजत्वका कारणले होइनन्, सबभन्दा ठूला सेवक भएका कारणले हुन्। यसकारण श्रावणकोरका प्रत्येक महाराजा 'पदमनाभदास' कहलाइने कुरा कति उत्कृष्ट र कति शोभनीय भएको छ। यो एउटा गौरवपूर्ण उपाधि हो र जसले श्रावणकोरका महाराजालाई यो उपाधि दिए, उनलाई म बधाई दिन्छु। यसकारण महाराजा वा महारानीलाई हामी कोही भन्दा जौंभरि पनि उच्च छैनन् भन्दा वास्तवमा स्वयं महाराजा र महारानीद्वारा स्वीकृत सत्यलाई नै तपाईंहरुका सामु राखेको हुँ। र यो कुरा सत्य हो भने कसैले पनि आफूलाई अरु कुनै व्यक्तिभन्दा श्रेष्ठ मान्ने धृष्टता कसरी गर्नसक्छ ? यस कारण म तपाईंहरुलाई भन्छु, यो मन्त्र ठीक छ-भने र यति हुँदा-हुँदै पनि अवर्ण कहलाइने मानिसहरुका प्रवेशले मन्दिर अपवित्र हुन्छ भन्ने कसैले मान्ने गर्छ भने त्यस्ता व्यक्तिलाई म गम्भीर पापको अपराधी घोषित गर्छु। तपाईंहरुसित साँचो भन्छु, यो घोषणाले मन्दिरहरुलाई पवित्र बनाएको छ, उनीहरुमा लागेका दाग धोइदिएको छ।

म चाहन्छु, यो मन्त्रलाई सबै स्त्री, पुरुष र नानीहरुले आफ्ना हृदय-मन्दिरमा प्रतिष्ठित गरून् र यसमा – जस्तो मेरो मान्यता छ – हिन्दू-धर्मको सार समाहित छ भने यो मन्त्रलाई सबै मन्दिरहरुका मुख्य द्वारमा खोपिदिऊन्। त्यस बेला तपाईंहरु के यो सम्झनुहुन्न, हामी ती मन्दिरहरुमा कसैको पनि प्रवेशलाई वर्जित गर्नु पग-पगमा यो मन्त्रलाई झूठो बनाउनु हुँदैन ? यस कारण तपाईंहरु आफूलाई यो उदारतापूर्ण घोषणाका योग्य पात्र सिद्ध गर्न चाहनु हुन्छ र स्वयं आफ्नाप्रति इमानदार तथा आफ्ना भाग्य - निर्माताहरुप्रति साँचो हुन चाहनु हुन्छ भने यो घोषणालाई शब्दशः पनि र भावनाले पनि कार्यान्वित गरेर देखाउनुहोस। म त यसलाई एउटा यस्तो महान् आध्यात्मिक कदम मान्छु, जसले नास्तिकहरुका हृदयबाट नास्तिकता हटेर जान्छ, हिन्दू-धर्म वा धर्म-मात्रका सत्यलाई शंकाको दृष्टिले हेर्नेहरुका सबै शंकाहरुलाई मेटाइदिन्छ। यसलाई ठीक-ठीक बुझिए यसले नास्तिकहरुका अज्ञानजनित नास्तिकता लोप भएर जान्छ। यो घोषणाको तिथिदेखि श्रावणकोरका मन्दिर, जसका बारेमा मैले ती ईश्वरका धाम होइनन् भनेथें,

वास्तवमा ईश्वरका धाम भएका छन्, किन भने अस्पृश्य मानिएका कसैलाई पनि यिनीहरुमा प्रवेश अब वर्जित रहेन। यस कारण म यो आशा गर्छु र प्रभुसित मेरो यही प्रार्थना छ – श्रावणकोरमा यस्तो कोही पनि पुरूष वा स्त्री देख्न नपाइयोस्, जो ती मन्दिरहरुका द्वार समाज-बहिष्कृत मानिएका मानिसहरुका निंति खोलिएका छन् भनेर मन्दिरमा जाँदैनन्।

[अंग्रेजीबाट]

हरिजन, 30.1.1937



18

# भाषण : सार्वजनिक सभा, कोट्टयमूमा

मैले हिन्दू-धर्मको सार बुझेको छु, त्यसैलाई बुझाउने प्रयत्न गरेको हुँ र यसै सिलसिलामा मैले उनीहरुका सामु 'ईशोपनिषद्' को एउटा अत्यन्त सोझो मन्त्र राखेको छु। तपाईंहरूलाई यो थाहा होला, जुन उपनिषद् वेद जतिकै पवित्र मानिन्छ, 'ईशोपनिषद्' तिनैमध्ये एउटा हो। 'ईशोपनिषद्' को पहिलो नै मन्त्रको अर्थ छः यो विश्वका कण-कणमा ईश्वर व्याप्त छन्। यो मन्त्रमा ईश्वरलाई स्रष्टा, ईश र विश्वका अधिष्ठाता भनिएको छ। यो मन्त्रका दृष्टा ऋषिलाई विश्वका कण-कणमा ईश्वर व्याप्त छन् मात्र भनेर सन्तोष लागेन। अतः उनले भन्दै लगे: 'ईश्वर सर्वव्यापी छन्, यस कारण यहाँका कुनै पनि वस्तुमा – आफ्नै शरीरमाथिरि – तिम्रो स्वामित्व छैन। तिमीसित जे-जति छन्, ईश्वर ती सबका निर्विवाद स्वामी हुन्'। यस कारण आफूलाई हिन्दू भनाउनचाहनेहरुले द्विजत्व, अथवा ईसाईहरुका भाषामा भन्ने हो भने 'नवजन्म' प्राप्त गर्नका निंति ती सबै वस्तुहरुलाई ईश्वरार्पित गर्नुपर्छ वा तिनलाई त्याग्नुपर्छ, जसलाई अज्ञानवश आफ्ना सम्पत्ति मान्दै आएका छन्। ईश्वरार्पण वा त्याग गरेपछि उसलाई भनिन्छ, यसका पुरस्कार-स्वरूप ईश्वरले अन्न, वस्त्र, आश्रय आदिका सम्बन्धमा उसका जम्मै आवश्यकताहरु पूर्ण गर्ने कुरामा पूरा-पूरा ध्यान राखेका छन्। यसकारण जीवनका आवश्यक वस्तुहरुलाई भोग्ने अथवा तिनलाई उपयोग गर्नका निंति शर्त छ, तिनलाई ईश्वरार्पित वा त्याग गरिनु पर्छ। र यो अर्पण वा त्याग दिन्हौं गर्नुपर्छ, नत्र यो माया-मोहको संसारमा हामीले जीवनको यो सबभन्दा मुख्य कुरा बिर्सिने डर हुन्छ। यी सब

---

30.1.1937 पृष्ट 322-324, खंड—64, गान्धी वाङ्मय

मनिसकेपछि मन्त्र-दृष्टा ऋषि भन्छन् : 'कसैका धनलाई लोभका आँखाले नहेर' । म तपाईहरुसित भन्छु, यो सानो मन्त्रमा पनि जुन सत्य लुकेको छ, त्यसले प्रत्येक मानिसको इहलौकिक र पारलौकिक दुवै प्रकारका उच्चभन्दा उच्च आकांक्षाहरुलाई तृप्त गर्नसक्छ। संसारका धर्म-ग्रन्थहरुमा सत्यको खोजी गर्दा मैले यस्तो कुनै कुरा पाइनँ, जसलाई यो मन्त्रमा जोडनुपर्ने आवश्यकता छ। धर्म-ग्रन्थहरुका जुन थेर-थोर अध्ययन मैले गरेको छु - र मेरो अध्ययन अत्यन्त सीमित छ भन्ने म मान्छु - त्यसलाई हेर्दा मलाई लाग्छ, सबै धर्म-ग्रन्थहरुमा जे-जति उत्तम छन्, ती यो मन्त्रबाट नै उद्‌भव भएका छन्। विश्वबन्धुत्व – विश्वभरका मानवको मात्र होइन, जीव मात्रको बन्धुत्व हेर्नु हो भने त्यो मैले यो मन्त्रमा पाएको छु। प्रभु र जगन्नियन्तामा – वा त्यसलाई जे-सुकै नाउँ हामीले दिऔं – अविचल श्रद्धा चाहिन्छ भने त्यो म यो मन्त्रमा पाउँछु। ईश्वरप्रति सम्पूर्ण समर्पण र आफ्ना जम्मै आवश्यकताहरुका पूर्तिका निंति उनैमा निर्भर रहने कल्पनाको दर्शन गर्नु हो भने म फेरि पनि भन्छु, मलाई यो मन्त्रमा त्यो दर्शन पनि हुन्छ। ईश्वर तपाईंका र हाम्रा, सबका रोम-रोममा, कण-कणमा, श्वास-प्रश्वासमा व्याप्त छन्, त्यस उसले यसबाट म जगत्‌का सबै जीवहरुको समानताको सिद्धान्त निकाल्छु, र यसले ती सबै व्यक्तिहरुका आकांक्षाको पनि तृप्ति हुनुपर्छ, जो चिन्तनको स्तरमा समतावादी छन्। यो मन्त्रले मलाई भन्छ, जुन चीज ईश्वर को हो, त्यसलाई म आफ्नो ठानेर आफूसित राख्न सक्तिनँ र मेरो जीवन अनि यो मन्त्रमा आस्था राख्ने सबै मानिसका जीवन सम्पूर्णतः ईश्वरोपित छन् भने यो निष्कर्ष निस्कन्छ -- त्यो जीवन जीव-मात्रको सततः सेवाको जीवन हुनुपर्छ।

यो हो मेरो श्रद्धा र म भन्छु, यसैमा आफूलाई हिन्दू हुँ भन्ने सबै सबै मानिसहरुको श्रद्धा हुनुपर्छ। म आफ्ना ईसाई र मुसलमान दाज्यूभाइहरुसित पनि यो भन्ने धृष्टता गर्छु, उनीहरुले यो भन्दा बढ़ता केही पाउने छैनन्। म चाहन्छु, श्रावणकोरका हिन्दूहरुले यो मन्त्रमा निहित उच्चादर्शलाई साकार बनाउनमा सबै मानिसहरुले, मुसलमान होऊन्, ईसाई अथवा अरू कोही, सहायता गरून्। हिन्दू-धर्मका नाउँमा भइराखेका अनेकानेक अन्धविश्वासबाट म अनभिज्ञ छैनँ भन्ने कुरा तपाईहरुबाट लुकाउन चाहन्नँ। हिन्दू-धर्मका नाउँमा हुने ती तमाम अन्धविश्वासहरुसित म अवगत छु र यसकालागि मलाई ठूलो दुःख छ। चोरलाई चोर भन्न म हिच्किचाउँदिनँ। अस्पृश्यतालाई सबभन्दा ठूलो अन्धविश्वास हो भन्न म कहिल्यै हिच्किचाइनँ। तर ती सब अन्धविश्वासहरु भएर पनि म हिन्दू नै भएर बसेको छु। कारण, यी अन्धविश्वासहरु हिन्दू-धर्मका अंग हुन् भनेर म

मान्दिनँ। हिन्दू-धर्ममा धर्म-ग्रन्थहरुका वचनहरुलाई व्याख्या गर्ने जुन नियम भनिएका छन्, तिनैबाट मैले सिखें, जे-जति त्यो सत्यसित, जसको प्रतिपादन अहिले मैले गरें र जुन उक्त मन्त्रमा निहित छ, असंगत छ, त्यसलाई हिन्दू-धर्मको अंग होइन भनी निस्संकोच मानेर त्यागि दिऊँ।



# 19

# यज्ञ

यो लोक वा परलोकमा केही पनि बदलीमा नलिई वा इच्छा नगरी परमार्थका लागि गरिएका कर्मलाई हामी 'यज्ञ' भन्छौं। कर्म कायिक होस वा मानसिक, चाहे वाचिक, त्यसको विशालभन्दा विशाल अर्थ लाउनुपर्छ। 'परमार्थकालागि'को तात्पर्य केवल मनुष्य-जातिका लागि पनि, अरू जीवनहरुको बलि दिनु वा तिनलाई नाश गर्नु यज्ञको गन्तीमा आउन सक्तैन।

वेदादिमा घोड़ा, गाई आदिलाई बलि दिने जुन कुरा भनिएको छ, त्यसलाई हामीले भूल ठानेका छौं। त्यहाँ पशु-हिंसाका अर्थ लगाए यस्तो होम सत्य र अहिंसाको तराजुमा उचित ठहरिन सक्तैन, यतिमा हामीले सन्तोष मानेका छौं। जुन वचन धर्मका नाउँमा प्रसिद्ध छन्, त्यसका ऐतिहासिक अर्थ लाउँदा हामी फँस्दैनौं र त्यस्ता अर्थहरुको अन्वेषण गर्ने अयोग्यतालाई हामी स्वीकार गर्दछौं। त्यो योग्यता प्राप्त गर्ने हामी प्रयत्न पनि गर्दैनौं, किनभने ऐतिहासिक अर्थमा जीवन-हिंसा संगत ठहरिए पनि अहिंसालाई सर्वोपरि धर्म मात्राका कारणले हाम्रा निंति अर्थ नरून्चे आकार त्याज्य छ।

उक्त व्याख्यानुसार विचार गर्दा हामी देख्दछौं, जुन कर्मले धेरभन्दा धेर जीवहरुको धेरभन्दा धेर क्षेत्रमा कल्याण हुन्छ र जुन कर्म धेरभन्दा धेर मानिसले धेरभन्दा धेर सरलताले गर्न सक्छन् र जसबाट धेरभन्दा धेर सेवा हुन्छ, त्यो

पृष्ट 240-241, 257-259, खंड—44, गान्धी वाङ्मय

महायज्ञ हो वा राम्रो यज्ञ हो। अतः कसैको पनि सेवाका निमित्त अरू कसैको अकल्याण चाहनु वा गर्नु यज्ञ-कार्य हुनसक्तैन र यज्ञबाहेक गरिएको काम बन्धनरूप हो, यो हामीलाई 'भगवद्गीता' ले भन्छ र अनुभवले पनि यही सिखाउँछ।

यस्तो यज्ञ बिना यो संसार एक क्षण पनि टिक्न सक्तैन, यसकारण नै गीताकारले ज्ञानका केही झलक अर्को अध्यायमा देखाएर तेस्रो अध्यायमा त्यसका प्राप्तिका साधनमा प्रवेश गराएका छन् र स्पष्ट भनेका छन्, हामीले यज्ञलाई जन्मसितै लिएर आएका हौं। हामीले यो शरीर केवल परमार्थकालागि पाएका हौं र यस कारण यज्ञ नगरी खाने मानिसले चोरिएको खान्छ भनेर गीताकारले यस्ता कठोर कुरा धरि भनिदिएका छन्। शुद्ध जीवन बिताउन चाहनेका सबै काम यज्ञरूप हुन्छन्। हाम्रो यज्ञसहित जन्मनुको मतलब नै हो, जन्मदेखि नै हामी ऋणी छौं। यस कारण हामी जगत्का सँधैका दास हौं। र जस्तो स्वामीले दासका सेवाका सट्टामा खाना, लुगा-फाटा दिन्छ, त्यस्तै जगत्का स्वामीले हामीबाट काम लिनका निंति दिएका अन्न-वस्त्रादिलाई हामीले कृतज्ञतापूर्वक स्वीकार गर्नुपर्छ। जे-जति हामी पाउँछौं, त्यो हाम्रो हक हो भन्ने हामीले ठान्नुहुन्न र नपाएमा मालिकलाई दोष पनि हामीले दिनुहुन्न। यो देह उनको हो, चाहे यसलाई उनले राख्छन, चाहे राख्दैनन्। यो स्थिति न त दुःखद हो, न त दयनीय। हामीले आफ्नो स्थान बुझे यो स्वाभाविक हो र यस कारण सुखद र चाहनु पर्ने पनि। यस्तो परम सुखको अनुभवको निंति अचल श्रद्धा त अवश्यै चाहिन्छ। आफ्नो निंति कुनै चिन्ता नगर्नू, सबै थोक परमेश्वरलाई जिम्मा लाउनू - यस्ता आदेश मैले सबै धर्ममा पाएको छु।

तर यो वचनले कसैलाई म अत्ताल्याउन चाहन्न। मनलाई स्वच्छ राखेर सेवा आरम्भ गर्नेले उसको आवश्यकता दिन-प्रतिदिन स्पष्ट हुँदै जान्छ र त्यसरी नै उसको श्रद्धा बढ्दै जान्छ। जो स्वार्थ छोड्न चाहँदैन, आफ्नो जन्मको स्थिति थाह पाउन तैयार छैन, उसका लागि त सेवाका सबै मार्ग कठिन हुन्छन् उसको सेवामा त स्वार्थको गन्ध आइनै रहन्छ। तर यस्ता स्वार्थी जगत्मा कम्ति नै पाइएलान्। केही-न-केही निस्वार्थ सेवा हामी सबैले जानी-नजानी गरिरहेकै हुन्छौं। यही कुरालाई विचारपूर्वक गर्दा हाम्रो पारमार्थिक सेवाको वृत्ति बढ्दै जाने गर्छ। त्यसमा हाम्रो सच्चा सुख छ र जगत्को कल्याण छ। फेरि कोही सन्तको पूंजी नै 'परोपकारार्थ' वा अधिक सुन्दर भाषामा भन्ने हो भने 'स्वार्थ' हुन्छ भन्ने होइन, तर मानिस मात्रको पूंजी सेवार्थ हो। र यति भएपछि सारा जीवन या भोग समाप्त भएर जान्छ, जीवन त्यागमय बन्छ। मानिसले त्याग गरेर नै भोग गर्छ। पशु र

मानिसको जीवनमा यही भेद छ। जीवनको यो अर्थले जीवनलाई शुष्क बनाइदिन्छ, यसले कला नष्ट हुन्छ, गृहस्थ-जीवन विनाश भएर जान्छ, धैरै मानिसहरु यो आरोप लगाएर उक्त विचारलाई सदोष सम्झन्छन्। तर मेरो विचारमा यसो भन्नु त्यागलाई अनर्थ गर्नु हो। त्यागको माने संसारबाट भागेर जंगलमा गएर बासोबास गर्नु होइन, तर जीवनको प्रवृत्ति मात्रमा त्यागको संचार गर्नु हो। एउटा गृहस्थको जीवन त्यागमय र भोगमय दुवै हुन सक्तछ। मोचीले जुत्ता सिलाउनु, किसानले खेती गर्नु, व्यापारीले व्यापार गर्नु र हजमले केश काट्नु त्यागभावनाले हुनसक्छ वा त्यसमा भोगको लालसा हुन सक्छ। जसले यज्ञार्थ व्यापार गर्छ, उसले करोडौंको व्यापारमा पनि लोक-सेवालाई ध्यानमा राख्छ, कसलाई धोखा दिंदैन, सट्टाबाजी गर्दैन, करोडौंको सम्पत्ति भएर पनि सामान्य भएर बस्छ, करोडौं कमाएर पनि कसैको हानि गर्दैन। कसैको हानि गर्नका सट्टामा करोड़ौंको हानि गरिपठाउँछ। यस्तो व्यापारी मेरो कल्पनामा मात्र हुन्छ भनेर ठानी कोही नहाँसून्। संसारका सौभाग्यले यस्ता व्यापारी पश्चिम र पूर्व दुवैमा छन्। औंलामा गन्न सकिने मात्र भए पनि र एकजना मात्र जीवित उदाहरण भए पनि त्यसलाई कल्पनाको कुरा हो भन्नु मिल्दैन। यस्तो एकजना लोकोपकारी दर्जीलाई तपार्हहरुले बढ्वाणमा देख्नुभएकै छ। यस्तो एकजना हजमलाई म चिन्छु र यस्तै एकजना बुनकरलाई हामीमा कसले चिनेको छैन ! हेरयौं-खोज्यौं भने हामीले सबै धन्धाहरुमा यज्ञार्थ आफ्नो धन्धा गर्ने औं तदर्थ जीवन बिताउने मानिस पाउनसक्छौं। यो अवश्य हो, यस्ता यज्ञिकले आफ्ना धन्धाबाट आफ्ना आजीविका प्राप्त गर्छन्। तर उनीहरु आफ्ना धन्धा आजीविकाका निमित्त गर्दैनन्, आजीविका उनीहरुका निंति त्यो धन्धाको गौण फल हो। मोतीलाल पहिले पनि दर्जीको धन्धा गर्थ्यो र ज्ञान भएपछि पनि दर्जी नै भइबस्यो। भावना बदलनाले उसको धन्धा यज्ञरूप बन्यो, त्यसमा पवित्रता आयो र काममा अरूका सुखको विचारले प्रवेश गर्‍यो। त्यसै समय उसको जीवनमा कलाको प्रवेश भयो।

यज्ञमय जीवन कलाको पराकाष्ठा हो; साँचो रस त्यसैमा छ, किनभने त्यसबाट रसको नित्य नयाँ झरना प्रकट हुन्छन्। यज्ञ भार-रूप लागे त्यो यज्ञ होइन जुन कष्टकर हुन्छ, त्यो त्याग होइन। भोगको अन्त्य नाश हो, त्यागको अन्त्य अमरता। रस स्वतन्त्र वस्तु होइन, रस त हाम्रो वृत्तिमा वर्त्तमान छ। एकजनालाई नाटकका पर्दामा मज्जा आउँछ, अर्कोलाई आकाशमा नित्य नयाँ-नयाँ प्रकट हुने दृश्यहरुमा। रस परिशीलनको विषय हो। जुन चीज रसका रूपमा बालककालदेखि सिखाइन्छ, जसलाई रसका नाउँमा जनतामा प्रवेश गराइएको छ, त्यसलाई रस मान्दिन। कुनै

एउटा जातिलाई रसमय लागेको वस्तु अर्को जातिलाई रसहीन लागेको उदाहरण हामी थुप्रै पाउँछौं।

यज्ञ गर्ने अनेकौं सेवकहरु मान्दछन्, हामी निष्काम भावले सेवा गर्छौं, अतः मानिसहरूबाट आवश्यकताभरिको, र अनावश्यक पनि, लिने हामीले आज्ञापत्र पाएका छौं। कोही सेवकको मनमा यो विचार आउनासाथ उसको सेवापना हराँउछ, सरदारपना आउँछ। सेवामा आफ्ना सुबिस्ताका विचारलाई स्थान हुँदैन। सेवकको सुबिस्तालाई स्वामी अर्थात् ईश्वरले हेर्छन्, दिनुपर्नेभए उनले दिन्छन्। यो कुरा ध्यानमा राखेर सेवकले पाएजति लिनुहुँदैन। आवश्यकताभरि मात्र लिनुपर्छ, बाँकी त्यागिदिनुपर्छ। आफ्नो सुबिस्ताको रक्षा नभए पनि शान्त बसून्, रीस नगरून्, मन पनि खिन्न नबनाऊन्। याज्ञिकको पुरस्कार, सेवाको मजदूरी, यज्ञ-सेवा नै हो। त्यसमा उसको सन्तोष रहेको हुन्छ।

सेवा-कार्यमा जबर्जस्ती पनि काम गरिँदैन। त्यसलाई अन्त्यको लागि पनि छोड्िँदैन। आफ्नो काम त पूरा गर्नु, तर अरुको काम पैसा विनै गर्नुपर्छ भन्ने ठानेर जसो-तसो वा जहिले इच्छा भो, तहिले गर्दा केही हर्जा छैन भनेर ठान्ने मानिसले यज्ञको कखरा पनि जानेको हुँदैन। सेवामा त सोह्रै शृंगार गर्नुपर्छ, आफ्नो सम्पूर्ण कला त्यसमा खर्च गर्नु पर्छ। पहिले यो, त्यसपछि सेवा। मतलब यो हो, शुद्ध यज्ञ गर्ने मानिसको लागि आफ्नो केही पनि हुँदैन। उसले सबै 'कृष्णार्पण' गरिदिएको हुन्छ।



20

## हिन्दू-धर्मले हाम्रा निंति के गरेको छ ?

आज हामी जुन देख्छौं, त्यो शुद्ध हिन्दू-धर्म होइन तर धेरजसो त्यसको विद्रूपक हो। अन्यथा मलाई त्यसका पक्षमा बोल्ने आवश्यकता पर्ने थिएन, त्यो स्वयं बोल्ने थियो, ठीक त्यसरी नै जसरी म पूर्णतः शुद्ध भएको भए मलाई तपाईंहरुसित बोल्ने आवश्यकता पर्ने थिएन। ईश्वर आफ्नो जिभ्रोले बोल्दैनन् र जति हृदयसम्म मानिस ईश्वरको छेउमा आउजाउ गर्छ, त्यति हृदयसम्म ईश्वर बन्दछ। हिन्दू-धर्मले मलाई सिखाउँछ, मेरो शरीर त भित्र बस्ने आत्माको शक्तिमा एउटा सीमाजस्तो छ।

जसरी पश्चिमका देशहरुमा मानिसहरुले भौतिक क्षेत्रमा आश्चर्यजनक खोजी गरेका छन्, त्यसरी नै हिन्दू-धर्मले धर्म, अध्यात्म र आत्माका क्षेत्रमा अझ बढ़ता आश्चर्यजनक खोजीहरु गरेको छ। तर हामीसित यी महान् र सुन्दर खोजीहरुलाई देख्ने आँखा नै छैनन्। पश्चिमी विज्ञानले जुन प्रगति गरेको छ, त्यसले हामी आश्चर्यचकित भएका छौं। वास्तवमा प्रायः यस्तो लाग्छ, ईश्वरले बुद्धिपूर्वक भारतलाई यो दिशामा प्रगति गर्नुबाट रोकिदिएका छन्, जसले गर्दा त्यसले भौतिकवादको ज्वारलाई प्रतिरोध गर्ने आफ्नो विशेष दायित्व पूर्ण गर्न सकोस्। आखिर हिन्दू-धर्मका केही यस्तो छ, जसले उसलाई अझसम्म जीवित राखेको छ। यसले बेबिलोनिया, सिरिया, फारस र मिश्रका सभ्यताहरुको पतन भएको

---

24.1.1927, पृष्ट 544-545, खंड –35, गान्धी वाङ्मय

देखेको छ। आफ्ना चारैतिर हेर्नोस। कहाँ छ रोम र कता छ यूनानी के आज तपाई गिबनद्वारा वर्णित इटालिलाई – वा प्राचीन रोम भनौं, किन भने रोम नै इटाली थियो – कतै देख्नुहुन्छ? यूनानी जानोस्। विश्वविख्यात एटिक सभ्यता कहाँ छ ? फेरि भारतमा आउनुहोस, यहाँका प्राचीनतम लेख-आलेखहरु हेर्नोस् र आफ्ना चारैतिर हेर्नोस्। तपाई विवश भएर भन्नुहुनेछ, "हो, म यहाँ प्राचीन भारतलाई अझै पनि जीवित देख्छु।" यो सत्य हो, जता-ततै गोबरका थाक पनि छन्, तर तिनका मुनि बहुमूल्य सम्पत्ति दबेका छन्। र त्यो जीवित रहेको कारण हो, हिन्दू-धर्मले अफ्ना सामु जुन उद्देश्य राखेको थियो, त्यो भौतिक दिशामा होइन तर आध्यात्मिक दिशामा विकास गर्ने थियो।

हिन्दू-धर्मका अनेकन् देनहरुमध्ये एउटा अदभूत देन हो, मूक प्राणीहरुसित मानिसको तादाम्यको विचार। मेरो दृष्टिमा गो-पूजा एउटा महान् विचार हो, जसलाई अझ विस्तार गर्न सकिन्छ। आधुनिक धर्म-परिवर्तन गर्ने प्रवृत्तिबाट त्यो मुक्त रहनु पनि मेरो दृष्टिमा एउटा बहुमूल्य चीज हो। यसलाई प्रचार गर्ने केही आवश्यकता छैन। यसले मन्छ, 'जीवन जिऊ'। अब यो मेरो काम हो, तपाईको काम हो, हामी जीवन जिऔं र फेरि त्यसको प्रभाव आउने युगहरुकालागि छोड़िदिऔं। अब त्यसले जुन विभूतिहरु प्रदान गरेको छ, तिनलाई लिनुहोस; अपेक्षाकृत ज्यादै आधुनिक नाउँहरु छोड़िदिए पनि रामानुज छन्, चैतन्य छन्, रामकृष्णा छन्, जसले हिन्दू-धर्ममाथि आफ्ना छाप छोड़ेका छन्। हिन्दू-धर्म कुनै पनि हालतमा एउटा मृतप्रायः वा मृत धर्म होइन।

फेरि आश्रामका रूपमा त्यसको योगदान छ, जुन एउटा अदभूत योगदान हो। यस्तो प्रकारको चीज सारा संसारमा कतै छैन। केथेलिक ईसाईहरुमा विवाह नगर्ने मानिसहरुको एउटा सम्प्रदाय छ, जो हामीहरुकहाँ ब्रह्मचारीहरु जस्ता छन्, तर त्यो एउटा संस्था होइन, जब कि भारतमा प्रत्येक बालकलाई प्रथम आश्रमबाट पार हुनुपर्ने हुन्छ। कस्तो भव्य त्यो कल्पना थियो! आज हाम्रा आँखा मैलिएका छन्, विचार अझ बढ़ता मैला छन् औ शरीर सबभन्दा बढ़ता मैला छ, किन भने हामीहरु हिन्दू धर्मलाई नकारिरहेका छौं।

एउटा अर्को चीज पनि छ, जसको उल्लेख मैले गरेको छैन। मक्सम्युलरले चालीस वर्षअघि भनेका थिए, यूरोपका मानिसहरु बिस्तार-बिस्तार अब यो बुझ्न लागेका छन्, पुनर्जन्मको कुरा कुनै सिद्धान्त होइन, तर एउटा तथ्य हो। त, यो विचार पूरा-पूरी हिन्दू-धर्मकै देन हो।

आज वर्णाश्रम-धर्म र हिन्दू-धर्मलाई त्यसलाई मान्नेहरुले नै भूल रूपमा प्रस्तुत गरिरहेछन् र त्यसलाई नकारिरहेछन्। यसको उपाय नष्ट गर्नुमा होइन, सुधार गर्नुमा छ। हामीले आफूभित्र साँचो हिन्दू- भावना उत्पन्न गर्नुपर्छ र त्यसपछि सोधौं, त्यसले आत्मालाई सन्तुष्ट गर्छ कि गर्दैन!



# 21

## कांग्रेस र ईश्वर

मेरा ईश्वर त मेरा सत्य र प्रेम हुन्। नीति औ सदाचार ईश्वर हुन्। निर्भयता ईश्वर हुन्। ईश्वर जीवन औ प्रकाशका मूल हुन्, र पनि यी सबभन्दा माथि छन्। किनभने उनी आफ्ना अमर्यादित प्रेमले तिनीहरुलाई पनि जीवित रहन दिन्छन्। उनी हृदयलाई देख्न सक्ने छन्। उनी बुद्धि औ वाणीभन्दा माथि छन्। हामी आफै आफूलाई जति जान्दछौं, त्योभन्दा धेर उनी हामी र हाम्रा हृदयलाई जान्दछन्। जस्तो हामी भन्छौं, त्यस्तो उनी हामीलाई मान्दैनन्। किनभने उनी जान्दछन्, हामी मुखले जे भन्छौं, धेरजसो त्यही हाम्रो भाव हुँदैन र केही मानिसहरू जानी-जानी त्यसो गर्छन् अनि कोही अनजानमा। ईश्वर उनीहरुका निंति एकजना व्यक्ति नै हुन्, जसलाई उनीहरु व्यक्ति-रूपमा उपस्थित भएको देख्न चाहन्छन्। जो उनका स्पर्श गर्न चाहन्छन्, उनीहरुका निंति उनी साकार छन्। उनी पवित्रभन्दा पनि पवित्र तत्व हुन्। जस-जसलाई उनमा श्रद्धा छ, उनीहरुकैलागि उनको अस्तित्व छ। विभिन्न मानिसहरुका निंति उनका विभिन्न रूप छन्। उनी हामीमा व्याप्त छन् र पनि हामीभन्दा पर छन्। 'ईश्वर' शब्द कांग्रेसबाट निकालिदिन सकिन्छ, तर ईश्वर स्वयंलाई त कसैले कहींबाट पनि निकाल्न सक्तैन। ईश्वरका नाउँमा गरिएको प्रतिज्ञा र केवल प्रतिज्ञा एउटै वस्तु होइन भने प्रतिज्ञा हुन्छ कुन चीज ? अन्तरात्मा त निश्चय नै ईश्वर शब्दको एउटा ठूलो अपर्याप्त र जबर्जस्ती बनाइएको पर्याय हो। उनका नाउँमा भयंकर अनीतियुक्त काम गरिएका छन् र

---

5.3.1925. पृष्ट 218-219. खंड 26. गान्धी वाङ्मय

अमानुष अत्याचार पनि भएका छन्, तर यति भएर पनि उनको अस्तित्व मेटिँदैन। उनी बड़ा सहनशील छन्, बड़ा धैर्यवान् छन्, तर उनी रूद्र पनि छन्। उनको अस्तित्व यो दुनियाँमा र भविष्यको दुनियाँमा पनि सबभन्दा धेर काम गराउने ताकत हो। जस्तो हामी आफ्ना छिमेकी – मानिस र पशु – दुवैसित व्यवहार गर्छौं, त्यस्तै व्यवहार उनी हामीसित पनि गर्छन्। उनको समक्ष अज्ञानको तर्क काम लाग्दैन। तर यी सब भएर पनि उनी दयावान् छन्, किन भने उनी हामीलाई पश्चाताप गर्ने मौका दिन्छन्। दुनियाँमा सबभन्दा ठूला प्रजातन्त्रवादी उनी नै छन्, किन भने उनी राम्रो-नराम्रो मन पराउनका निंति हामीलाई स्वतन्त्र छोड़िदिन्छन्। उनी सबभन्दा ठूला अत्याचारी पनि छन्, किन भने उनी प्रायः हाम्रा मुखसम्म पुगेका गाँससम्म पनि खोस्छन् र इच्छा-स्वातन्त्र्यका आड़मा छुटकारा लिने अत्यन्त कम्ति अवसर दिन्छन् र हाम्रा विवशतामा हास्छन्। यी सबै हिन्दू-धर्म अनुसार उनका लीला हुन्, उनका माया हुन्। हामी केही पनि होइनौं, केवल उनी हुन् र हामी हौं भने हामीले संधै उनका गुणहरुको गीत गाउनुपर्छ र उनका इच्छानुसार काम गर्नुपर्छ। आउनुहोस, उनका बाँसुरीका धूनमा हामी नाँचौं। सबै राम्रा नै हुन्छन्।



22

# तीनवटा महत्वपूर्ण प्रश्न

एकजना सज्जनले बड़ो विनम्र भावले तीनवटा प्रश्नहरु हिन्दीमा सोधेका छन्।

(1) वर्णभेद तपाई जन्मजात मान्नु हुन्छ। तर यो पनि तपाई मान्नु हुन्छ, कोही पनि मानिसले कुनै पनि कार्य गरे हर्जा छैन तथा कोही पनि मानिसमा ब्राह्मण, क्षत्रीय वा वैश्यादि द्विजहरुका गुण आउन सक्छन्। यस्तो अवस्थामा वर्णको पदवीको के आवश्यकता छ ? खालि जन्मवाद नाउँको आरोपण किन? जन्मलाई यतिको महत्व किन ?

(2) तपाई अद्वैतवादलाई मान्नु हुन्छ र यो पनि भन्नु हुन्छ, सृष्टि अनादि, अनन्त र सत्य छ। अद्वैतवादले सृष्टिको अस्तित्वलाई अस्वीकार गर्छ। तपाईं द्वैतवादी पनि हुनुहुन्छ, किनभने तपाई जीवात्माको स्वतन्त्र कर्त्तत्वमा श्रद्धा राख्नुहुन्छ। त्यस कारण तपाईंलाई अनेकान्तवादी वा स्याद्वादी भन्नु किन ठीक हुँदैन ?

(3) तपाईले कैयन्पल्ट लेख्नुभएको छ, ईश्वरको माने देहरहित, विरागी, स्वतन्त्र र उपाधिरहित शुद्धात्मा हो, अर्थात् ईश्वरले सृष्टि उत्पन्न गरेनन् अनि उनी पाप-पुण्यको निर्णय गर्न पनि बस्दैनन्। तै पनि तपाईं ईश्वरेच्छाका कुरा घरिघरि गर्नुहुन्छ। उपाधिरहित ईश्वरलाई इच्छा कसरी हुन सक्छ र उनका इच्छाका अधीन तपाई कसरी हुन सक्नु हुन्छ ? तपाईको आत्माले जे-जस्तो गर्न चाहन्छ, गर्न सक्छ आत्माले त्यसो

---

21.1.1926, पृष्ट 401-403, खंड—29, गान्धी वाङ्मय

गर्न नसके उसको पूर्वसंचित कर्म नै यसको कारण हो, न कि ईश्वर। तपाई सत्याग्रही हुनाका कारणले केवल मूढ़ात्माहरुलाई बुझाउन यो असत्य कुरा भन्नुभएको होइन होला। फेरि यो ईश्वरेच्छाको दैववाद किन?

(1) मैले वर्णभेदलाई मान्नु सृष्टिका नियमहरुलाई समर्थन गर्नु हो। हामीले आफ्ना माता-पिताका केही गुण-दोष जन्मदेखि नै प्राप्त गरेका छौं। मनुष्य-योनिमा मानिस नै जन्मन्छ, यसलाई जन्मानुसार वर्णको नै सूचक सम्झनुहोस। हामीले जन्मतः प्राप्त गुण-दोषहरुमा धेर-थोर परिवर्त्तन गर्न सक्छौं, यस दृष्टिले कर्मलाई पनि स्थान प्राप्त हुन्छ। एउटै जन्ममा पूर्वजन्ममा अर्जित संस्कारहरुलाई सर्वथा मेटाइदिनु शक्य छैन। यो अनुभवलाई दृष्टिमा राखेर जन्मले ब्राह्मण भएको मानिसलाई ब्राह्मण मान्नु चै सबै प्रकारले लाभदायक छ। विपरीत कर्म गर्नाले ब्राह्मण यसै जन्ममा शुद्र बन्दछ र पनि संसारले उसलाई ब्राह्मण नै मान्छ भने यसले संसारलाई केही हानि हुँदैन। यो सत्य हो, आज वर्ण-व्यवस्थाको अर्थ उल्टो भइरहेछ र यसै कारण त्यो छिन्न-भिन्न भएको कुरा पनि सत्य हो। तै पनि म जुन नियमको सत्यता पद-पदमा सिद्ध भएको देख्छु, त्यसलाई म कसरी अस्वीकार गर्न सक्छु ? म यो मान्छु, मैले त्यसलाई अस्वीकार गरें भने म धेरैवटा कठिनाँइहरुबाट बाँच्न सक्छु। तर यो त दुर्बुद्धिको मार्ग हो। मैले त यो स्पष्ट आह्वान गरेको छु, म वर्णहरु स्वीकार गर्दा ऊँच-नीचको भावलाई स्वीकार गर्दिनँ। जो सच्चा ब्राह्मण हो, उ सेवकको पनि सेवक भएर बस्छ। उसमा खालि ब्राह्मणका गुण अरुका गुणभन्दा बढ़ता हुनुपर्छ। तर आज त वर्ण पनि कुमालेको चक्रमा चढ़ेको छ र त्यसमा गोला बनिन्छ कि गाग्री, त्यो त विधाताले नै जान्दछन् कि त ब्राह्मणले।

(2) मैले ऑफूलाई अद्वैतवादी मानेको कुरा साँचो हो, तर द्वैतवादी को समर्थन पनि म गर्न सक्छु। संसारमा प्रतिक्षण परिवर्तन हुन्छ, यस कारण सृष्टिलाई असत्य – अस्तित्वरहित – भनिन्छ। तर परिवर्त्तन भएर पनि त्यसको एउटा यस्तो रूप छ, जसलाई त्यसको आफ्नो स्वरूप भन्न सकिन्छ। त्यो रूप त्यसको सत्ता छ, यो पनि हामी देख्न सक्छौं, यसकारण त्यो सत्य पनि छ। यसकारण त्यसलाई सत्यासत्य भने पनि मलाई आपत्ति छैन। मलाई त्यसकारण अनेकान्तवादी वा स्याद्वादी माने पनि केही आपत्ति छैन। मैले स्याद्वादलाई जस्तो बुझेको छु, त्यस्तै मान्छु। त्यसको जुन रूपलाई पण्डितहरु मान्छन्, शायद त्यो त्यस्तो छैन। उनीहरुले मसित वाद-विवाद गरे म हार्नेछु। मैले आफ्ना अनुभवद्वारा देखेको

छु, म आफ्ना दृष्टिले सँधै ठीक हुन्छु र प्रमाणिक टीकाकारहरुका दृष्टिले मेरा धेरै कुरामा त्रुटि हुन्छन्। तर म जान्दछु, आफ्ना-आफ्ना दृष्टिले हामी दुवै ठीक छौं। र यो प्रतीतिका कारणले म कसैलाई पनि सहसा झूठो वा कपटी मान्न सकिन्न। सात जना अन्धाहरुले हातीलाई सात प्रकारले वर्णन गरेका थिए र ती सबै आफ्ना-आफ्ना दृष्टिले ठीक थिए, परस्परमा एकाअर्काका दृष्टिमा गलती गर्दै थिए र ज्ञानीका दृष्टिमा ठीक पनि थियो, भूल पनि थियो। मलाई यो अनेकान्तवाद ज्यादै प्रिय छ। त्यसैबाट मैले मुसलमानको दृष्टिले मुसलमानको र ईसाईको दृष्टिले इसाईको परीक्षा गर्न सिखेको छु। मेरा विचारहरुलाई जब कसैले भूल भएको सम्झन्थ्यो, त्यस बेला पहिले-पहिले मलाई बड़ो रीस उठ्थ्यो; तर अब उसका विचारमाथि उसको दृष्टिले पनि विचार गर्न म आफूलाई समर्थ पाउँछु, यस कारण म उसित पनि प्रेम गर्न सक्छु, किन भने म संसारमा प्रेमको भोको छु। अनेकान्तवाद को मूलमा अहिंसा र सत्य दुवै छन्।

(3) म ईश्वरलाई जुन रूपमा मान्छु, त्यही रूपमा वर्णन गर्छु। म मानिस हरुलाई भ्रममा पारेर आफ्नो अधोपतन किन गरूँ? मैले उनीहरुबाट कुन पारितोषिक पाउनु छ? म त ईश्वरलाई कर्त्ता-अकर्त्ता मान्छु। यसको उद्भव पनि मेरो स्याद्वादबाटै हुन्छ। म जैनहरुका ठाउँमा बसेर तिनको कर्त्तव्य सिद्ध गर्दछु र रामानुजका ठाउँमा बसेर तिनका अकर्तृत्व। हामी सबै अचिन्त्यको चिन्तन गर्छौं, अवर्णनीयको वर्णन गर्छौं र अज्ञेयलाई जान्न चाहन्छौं। यसकारण हाम्रो भाषा तोते छ, अपूर्ण छ र कहिले-काँही त वक्रसम्म भइदिन्छ। यसै कारण त ब्रह्मका लागि वेदहरुले अलौकिक शब्दहरुका रचना गरे र उनलाई 'नेति' भनेका छन्। यद्यपि उनी छैनन्, तै पनि उनी छन्। अस्ति, सत्, सत्य, 0, 1, 11 ........ यसो भन्न सक्छौं। हामीहरु छौं, हामीलाई जन्माउने माता-पिता छन् र उनीहरुलाई पनि जन्माउने छन् . . . . यस कारण सबैलाई जन्माउने एकजना छन्, त्यो कुरालाई मान्नु कुनै पाप होइन, तर पुण्य हो, यो मान्नु धर्म हो। उनी छैनन् भने हामी पनि छैनौं। यसकारण हामी सबै उनलाई एक स्वरमा परमात्मा, ईश्वर, विश, विष्णु, राम, अल्ला, खुदा, दादा होरमज, जहोवा, गॅड इत्यादि अनेकौं र अनन्त नाउँहरुले डाक्छौं। उनी एक हुन्, अनेक हुन्, अणुभन्दा पनि साना छन् र हिमालयभन्दा पनि ठूला छन्; समुद्रको एउटा विन्दुमा पनि अटाउँछन् र सातवटा समुद्रले मिलेर पनि उनलाई आफूभित्र समाविष्ट गर्न सक्तैनन्, यति विशाल छन्, उनी। उनलाई जान्नकालागि बुद्धिको उपयोग नै के हुन सक्तछ र ? उनी त बुद्धिभन्दा पर छन्। ईश्वरको अस्तित्वलाई स्वीकार गर्नका निंति श्रद्धाको आवश्यकता छ। मेरो बुद्धिले

अनेकौं तर्क-वितर्क गर्न सक्तछ र म कोही नास्तिकसितको विवादमा हार्न सक्छु, तै पनि मेरो श्रद्धा मेरो बुद्धिभन्दा यति धेर अघि दौड़न्छ, समस्त संसारले विरोध गरे पनि म यही भन्छु, ईश्वर छन् र अवश्य छन्।

तर जसलाई ईश्वरको अस्तित्वलाई अस्वीकार गर्नु छ, उसलाई अस्वीकार गर्ने अधिकार छ, किनभने उनी दयालु हुन्, रहीम हुन्, रहमान हुन्, उनी कुनै माटोले बनाइएका राजा होइनन्, आफ्नो सत्ता स्वीकार गराउन उनले पल्टन राख्नु पर्दैन। उनले त हामीलाई स्वतन्त्रता दिन्छन् र पनि केवल आफ्ना दयाका बलले हामीमाथि शासन गर्छन्।

तर हामीहरुमध्ये कसैले उनको शासनलाई मान्दैन भने पनि उनी यही भन्छन्: 'खुशीसाथ मेरो शासन नमान, मेरो सूर्यले त तिमीलाई पनि प्रकाश दिन्छ, मेरो बादलले तिम्रोलागि पनि पानी पराइदिन्छ। मलाई आफ्नो सत्ता चलाउनका निंति बलात्कार गर्ने आवश्यकता छैन।' यस्ता ईश्वरको सत्तालाई उसले मान्दैन, जो मूर्ख छ; तर म उनलाई मान्ने करोड़ौं बुद्धिमान्हरुमध्ये एकजना हुँ, त्यसकारण उनलाई म सहस्रौं पल्ट प्रणाम गर्दा पनि थाक्दिन।



# 23

# ईश्वर छन्

एउटा यस्तो अव्यक्त, अपरिभाषित, रहस्यमय शक्ति अवश्य छ, जो विश्वको कण-कणमा व्याप्त छ। मलाई त्यसको प्रतीति हुन्छ, यद्यपि म त्यसलाई देख्न सक्तिनँ। यही त्यो अदृश्य शक्ति हो, जसको प्रभावको अनुभव त हुन्छ, तर त्यो कुनै पनि प्रमाणको घेराभित्र पर्दैन। किनभने म आफ्ना इन्द्रियहरुद्वारा जुन चीजहरुको अनुभव गर्छु, त्यो ती सबैभन्दा सर्वथा भिन्न छ। त्यो अतीन्द्रिय छ।

तर एउटा सीमासम्म ईश्वरको अस्तित्वलाई सिद्ध गर्नु सम्भव छ। संसारमा सामान्य कामहरुमा पनि मानिसलाई यो थाहा हुँदैन, यी सब कसले गर्दा संचालन भइरहेछन् र उनले किन र कसरी संसारको नियमन गर्छन्, तर यति त तिनीहरुले निश्चित रूपमा बुझेको छन्, कुनै शक्ति छ अवश्य, जसले संसारलाई संचालन गरिरहेछन्। गत वर्ष मैसुरको आफ्नो यात्रामा मैले अनेकन् निर्धन ग्रामीणहरुसितका कुराकानीको सिलसिलामा पाएँ, उनीहरुलाई यो पनि थाहा छैन, मैसुरका शासकको हुन् ? उनीहरुले यति नै उत्तर दिए, कोही देवताले शासन गर्छन्। ती गरीबहरु आफ्ना शासकका बारेमा यति थौरै जान्दछन् भने मेरो के लाग्छ ? आफ्ना शासनका तुलनामा उनीहरु जति साना छन्, म त ईश्वरका तुलनामा, म मन्त्र सक्तिनँ, कति धेर सानो छु। यसकारण मैले ईश्वरको अस्तित्वलाई, सम्राट्हरुका सम्राट्का अस्तित्वलाई अनुभूत गर्न नसके यसमा आश्चर्य गर्ने के काम ? तै पनि म यति अनुभव गर्छु – जस्तो कि ती ग्रामीणहरु मैसुरका बारेमा

---

11.10.1928, पृष्ट 361-365, खंड—37, गान्धी वाङ्मय

अनुभव गर्थे –ब्रह्मण्डमा एउटा व्यवस्था छ, एउटा अटल नियम विश्वको प्रत्येक वस्तु र प्रत्येक प्राणीलाई नियमन गरिरहेका छ। त्यो नियम अन्धो छैन, किन भने कोही पनि अन्धा वा विवेकशून्य नियमले जीवधारी प्राणीहरुका आचरणलाई नियमन गर्न सक्तैन। र अब त सर जगदीशचन्द्र बसुका आश्चर्यजनक खोजीहरुका आधारमा सिद्ध भइसकेको छ, पदार्थसम्म पनि जीवमय छ। यसरी विश्वका समस्त जीवनलाई नियमन गर्ने नियम नै ईश्वर हो। नियम र नियामक एउटै हुन्। म त्यो नियम क नियामक – ईश्वरका – बारेमा यति कम जान्दछु, यसकारण मैले उनका अस्तित्वलाई मान्नु अस्वीकार गर्नु हुँदैन। जसरी कुनै भौतिक शक्तिलाई मैले मान्नु अस्वीकार गरे वा त्यसको बारेमा नजान्ने बनि रहनाले म त्यसको प्रभावबाट मुक्त हुन सक्तिनँ त्यसरी नै ईश्वरका उनका प्रभावलाई स्वीकार नगर्दा म त्यसका प्रभावबाट अलग बस्न सक्तिनँ। अर्कोतिर नतशिर भएर मूक भावले ईश्वरीय शक्तिलाई स्वीकार गर्नाले जीवन-यात्रा त्यसरी नै सुगम-सरल हुनजान्छ, जसरी कोही व्यक्तिले त्यो सांसारिक सत्तालाई, जसको अधीन उ रहन्छ, स्वीकार गरेमा उसको जीवन सरल बन्छ।

मलाई एउटा आभास जस्तो अवश्यै हुन्छ, यो सतत परिवर्तनशील र नाशवान् विश्वको पछि कुनै यस्तो चेतन शक्ति छ, जुन स्वयं अपरिवर्तनशील छ, जसले कण-कणलाई एउटा सूत्रमा बाँध्छ, जसले सृजन, संहार र नव-सृजन गरिरहन्छ। त्यो सर्वज्ञ शक्ति नै ईश्वर हो। आफ्नो मात्र इन्द्रिय-ज्ञानको बलमा म जति पनि वस्तुहरुको प्रतीति गर्न पाउँछु, ती सबै नाशवान् छन्, अनित्य छन्, यसकारण ईश्वर नै अनश्वर र नित्य छन्।

र यो शक्ति मंगलकारी छ कि अमंगलकारी ? मलाई त यो पूर्णतया मंगलकारी नै लाग्छ। कारण हो, म देख्छु, मृत्युको वातावरणमा जीवन, असत्यको लड़ाईंमा सत्य र अन्धकारको घेरामा प्रकाशले अस्तित्व राखि छोड़ेको छ। यसैबाट म निष्कर्ष निकाल्छु, ईश्वर जीवन, सत्य र प्रकाशरूप छन् उनी प्रेम हुन्। उनी परम शिव-तत्व हुन्।

ईश्वरले बुद्धिलाई सन्तोष दिन सक्छन् भने त्यो ईश्वर ईश्वर होइनन्, जसले बुद्धिलाई नै मात्र सन्तोष दिन्छन्। ईश्वर त त्यति बेला मात्र ईश्वर कहलाइन सक्तछन्, जब उनको साम्राज्य हृदयमा हुन्छ, उनले हृदयलाई बद्लन सक्तछन्। उनका सेवकका हरेक, सानोभन्दा सानोकाममा पनि उनको झलक पाइनु पर्छ। यो त तब मात्र हुन सक्तछ, जब उनको साँचो दर्शन पाइन्छ। त्यो दर्शन पाँचवटा इन्द्रियहरुका ज्ञानभन्दा धेर साँचो हुनुपर्छ। इन्द्रियहरुको ज्ञान हामीलाई जतिकै

साँचो लागे पनि त्यो भूल हुन सक्छ, धेरैपल्ट इन्द्रियहरुले हामीलाई धोखा दिन्छन्। जुन ज्ञान इन्द्रियहरुभन्दा पर हुन्छ, त्यसमा भूल हुन सक्तैन। त्यो बाहिरी प्रमाणहरुले सिद्ध हुँदैन, तर भित्र ईश्वरलाई साँचो अनुभूत गर्ने व्यक्तिको आचार-व्यवहार र चरित्रमा भएको परिवर्तनले सिद्ध गर्छ।

यस्ता प्रकारका साक्ष्य सबै देश र जातिहरुका नबी-पैगम्बर, ऋषि-मुनिहरुका अनुभवमा पाइन्छन्, जसका शृंखला कहिल्यै चुँड़िदैनन्। यो प्रमाणलाई अस्वीकार गर्नु आफ्नै अस्तित्वलाई अस्वीकार गर्नु हो।

यस्तो अनुभव अटूट आस्थाको आधारमा नै प्रतिफलित हुन्छ। जुन व्यक्तिले ईश्वरका अस्तित्वलाई स्वयं अनुभव गरेर हेर्न चाहन्छ, उसले जीवन्त आस्थाको बलमा मात्र त्यसो गर्न सक्छ र आस्थालाई पनि कुनै बाह्य प्रमाणको आधारमा सिद्ध गर्नसकिन्न, त्यसकारण सबभन्दा निरापद माँग यही छ, संसारको नैतिक नियमनलाई र यस कारण नैतिक नियमलाई, सत्य र प्रेमको नियमलाई, सर्वोपरि नियम मानेर त्यसमा आस्था राखिनुपर्छ। र त्यो आस्थाको बाटो पैल्याउनु त्यही व्यक्तिकालागि सर्वाधिक फलप्रद हुन्छ, जसले सत्य र प्रेमका विरुद्ध पर्ने हरेक चीजलाई त्यागि दिने दृढ़ संकल्प गर्छ।

नराम्रो अस्तित्वको अरु कुनै युक्तिसंगत कारण मेरो विचारमा आउँदैन। यसो गर्ने इच्छा गर्नु आफूलाई ईश्वरको समकक्षी मान्नु हो। यंसकारण म पूर्ण विनम्रताका साथ नराम्रोलाई नराम्रोको रूपमा स्वीकार गरेर नै सन्तुष्ट छु। र म ईश्वरलाई सहिष्णु र धैर्यशील पनि यसकारणले भन्छु, उनी नराम्रोलाई संसारमा रहन दिन्छन्। म जान्दछु, ईश्वरमा नराम्रोको तत्व एकदमै छैन, उनी सर्वथा शुद्ध छन् र यति भएर पनि नराम्रो छ भने उनी त्यसबाट अलग छन्।

म यो पनि जान्दछु, आफ्नो प्राणलाई बाजीमा लगाएर नराम्रोको विरूद्ध मा मैले संघर्ष गरिनैं भने म ईश्वरलाई कहिल्यै चिन्न सक्ने छैन। मेरो आफ्नो तुच्छ र सीमित अनुभवले मेरो विश्वासलाई पुष्ट बनाउँछ। म शुद्ध-पवित्र बन्नका निंति जति प्रयत्न गर्छु, आफूलाई ईश्वरको त्यति नै नगीच पुगेको अनुभव गर्छु। आज त ममा नाउँ मात्रको नै श्रद्धा छ, तै पनि म आफैलाई उनको केही नजीग पुगेको अनुभव गर्छु। तर जब मेरो श्रद्धा हिमालय जस्तो अटल र त्यसका टुप्पामा हिउँ जस्तो धवल र उज्जवल बन्छ, तब म कति धेर निकटता त्यसद्वारा अनुभव गर्न-थाल्नेछु ? तब पत्र-लेखकसित आग्रह छ, तबसम्म उनले न्युमेनका प्रार्थनाको पाठ गरून्। न्युमेनले आफ्ना अनुभवका आधारमा यो गीत रचेका थिए –

यो घेर्न लागेको अन्धकारमा, हे प्रेममय ज्योति,
मेरो मार्ग आलोकित गर;
म घरबाट धेरै टाड़ा परेको छु र रात अन्ध्यारो छ,
हे ज्योति, मेरो मार्ग आलोकित गर;
मेरा धर्फरिएका पाउहरुलाई तिमी बल देऊ,
धेरै टाड़ा-टाड़ासम्म मेरो पथ दीप्त होस –
यसो म भन्दिनँ, म त चाहन्छु बस एक पैतालाभरि
एक पैतालाभरिको आलोकित पथ पर्याप्त हुन्छ मेरा लागि !

[अंग्रेजीबाट]

यंग इण्डिया, 11.10.1928



24

# भाषण : लोजानको सभामा

तपाईले मलाई सोध्नुभएको छ, ईश्वर सत्य हुन् भनेर म किन मान्छु! आफ्नो बाल्यकाल वा किशोरावस्थामा मलाई, हिन्दू-धर्मशास्त्रहरुमा जसलाई ईश्वरका सहस्रनाम (विष्णु सहस्रनाम) भनिएका छन्, जप गर्न सिखाइएको थियो। हाम्रो परिवारमा धार्मिक शिक्षा दिने जुन अनेकौं साना-ठूला वस्तुहरु थिए, तिनमा एउटा त्यो सानो जस्तो पुस्तिका पनि थियो, जसमा ईश्वरका सहस्रनाम दिइएको थिए। तर यी सहस्रनाममा नै ईश्वरको सम्पूर्ण नामावली समाप्त हुँदैन। हामी मान्छौं – र मेरो विचारमा यही सत्य हो – जति प्राणी छन्, त्यति नै ईश्वरका नाउँ छन् र यस कारण हामी यो पनि भन्छौं, ईश्वर अनाम छन् र उनका अनेक रूप भएका हुनाले हामी उनलाई अरूप भन्छौं, र उनी हामीसित कतियौं वाणीहरुमा बात मार्छन्, यस उसले हामी उसलाई अवाक् भन्छौं, इत्यादि-इत्यादि। यसरी नै मैले इस्लामको अध्ययन गरें र थाहा पाएँ, ईस्लाममा पनि ईश्वरका अनेकौं नाउँ छन्। ईश्वर प्रेम हुन् भन्ने मानिसहरुका स्वरसित स्वर मिलाएर म पनि भन्छु, ईश्वर प्रेम हुन्। तर आफ्नो हृदयको अन्तरमा म यही भन्छु, ईश्वर प्रेम-रूप होलान्, तर सबभन्दा धेर उनी सत्य-रूप हुन्। मानिसका वाणीका निंति ईश्वरको सम्पूर्ण वर्णन गर्नु सम्भव भएको भए म स्वयं त यही निष्कर्षमा पुगेको छु, ईश्वर सत्य हुन्। तर दुइ वर्षअघि म एक पाइला अझ अघि बढ़ें र मैले भनें, सत्य नै ईश्वर हुन। ईश्वर सत्य हुन् र सत्य नै ईश्वर हुन्, यी दुवै कुराका बीचको सूक्ष्म भेदलाई

31.12.1931, पृष्ट 446-449, खंड 48, गान्धी वाङ्मय

तपाईंहरुले बुझ्नु होला। यो निष्कर्षमा म यतिका वर्षका सत्यको अनवरत र कठिन खोजीपछि पुगेको हुँ। सत्यसम्म पुग्ने निकटतम मार्ग प्रेमको हो भन्ने मैले पाएँ। तर मैले यो पनि पाएँ। कमसे कम अंग्रेजी भाषामा प्रेम (लभ) का धेरैवटा अर्थ छन्; र काम-विकारको अर्थमा मानव-प्रेम त मानिसलाई पतन गराउने चीज पनि हो। मैले यो पनि देखें, अहिंसाको अर्थमा प्रेमका पुजारीहरुको संख्या संसारमा धेरै कम छ र आफ्नो खोजीमा अघि बढ़दै मैले 'ईश्वर प्रेम हुन' भन्ने कुरालाई खण्डन गरिनँ (तर) 'ईश्वर प्रेम हुन' यो कुरालाई बुझ्नु (प्रेमका धेरैवटा अर्थ भएका हुनाले) बड़ो कठिन छ, र काम-विकारका अर्थमा मानव-प्रेम एउटा अधोपतन गराउने वस्तु नै बन्छ। तर सत्यको दोहोरो अर्थ भएको मैले कहिले देखिनँ, र नास्तिकहरुसम्मले सत्यको आवश्यकता वा शक्तिलाई अस्वीकार गरेका छैनन्। कुरा यति मात्र होइन। सत्यलाई खोज्ने आफ्नो लगनमा उनीहरुले ईश्वरका अस्तित्वसम्मलाई अस्वीकार गर्नमा संकोच मानेनन् – अनि उनीहरुका आफ्नो दृष्टिकोणमा यो ठीक पनि छ। र उनीहरुकै तर्कका कारणले मेरो मनमा यो कुरा उठेको छ, ईश्वर सत्य-रूप हुन् भन्नका सट्टामा मैले भन्नुपर्छ – सत्य नै ईश्वर हो। यो संदर्भमा मलाई चार्लस ब्रेडलॅका नाउँको सम्झना आउँछ। उनी एकजना महान अंग्रेज थिए र आज भन्दा प्रायः पचास वर्षअघि उनको निधन भयो। उनी बड़ी उत्साहसाथ आफूलाई नास्तिक हुँ भन्थे। तर केही हदसम्म उनका जीवनका विषयमा मलाई धेर-थोर थाह छ, यसकारण मैले उनलाई कहिल्यै नास्तिक मानिनँ। म त उनलाई ईश्वरसित डर राखेर काम गर्ने मानिस थिए भन्छु, यद्यपि उनले यो कुरा स्वीकार गरेनन् र मलाई थाहा छ, मेरा कुरा सुनेर उनको अनुहार रातो हुन्थ्यो। म त उनलाई यही भन्थें, होइन, ब्रॅडलॅ साहेब, होइन, तपाई ईश्वरको डर राखेर काम गर्ने मानिस होइन कि सत्यको डर राख्ने मानिस हुनुहुन्छ। र जसरी मैले अनेकौं युवकहरुलाई निरूत्तर पारिदिएको छु, त्यसरी नै उनलाई यसो भनेर निरूत्तर पारिदिन्थें – 'सत्य नै ईश्वर हो'। 'ईश्वरका नाउँ करोड़ौं मानिसहरुले लिएका छन् र साथै उनका नाउँमा अवर्णनीय अत्याचार गरेका छन्। सत्यका नाउँमा वैज्ञानिकहरुले बहुधा क्रूरताका काम गर्दैनन् भन्ने होइन। मलाई थाहा छ, आज सत्य र विज्ञानका नाउँमा पशुहरुलाई चिरफार गरेर कस्तो अमानवीय क्रूरताको व्यवहार गरिन्छ। म यसलाई ईश्वरको अस्तित्वलाई अस्वीकार गर्नु हो भन्ने मान्छु, भलै तपाईं ईश्वरलाई सत्य भन्नोस वा अरू कुनै नाउँ दिनोस्। सारांश यो हो, ईश्वरको वर्णन नाउँले गरिए पनि त्यसमा धेरैं अपठयारा कुराहरु छन्। तर मानव-मस्तिष्कको क्षमता सीमित छ, र जब हामी यस्ता सत्ताका विषयमा

विचारछौं, जो मानिसको बुद्धिभन्दा पर छ, तब हामीले आफ्ना मस्तिष्कको क्षमताको त्यो सीमाभित्र नै काम गर्नुपर्छ। तर हिन्दू तत्त्वज्ञानमा एउटा अर्को कुरा पनि छ। त्यसले भन्छ, ईश्वरको मात्र अस्तित्व छ, त्यस बाहेक अरु कुनै वस्तुको सत्ता छैन। ईस्लामको त्यो प्रसिद्ध वचनमा, जसलाई 'कलमा' भनिन्छ, यसै सत्यमाथि जोड़ दिएर भनिएको र बुझाइएको छ। त्यसमा स्पष्ट भनिएको छ – र मुसलमानहरुले हरेक इबादतको समयमा त्यसलाई दोहोरयाउनुपर्छ – केवल अल्लाह छन्, अरू केही छैन। यही कुरा सत्यमा पनि लागू हुन्छ र सत्यका लागि संस्कृतमा जुन शब्द छ – अर्थात् सत् – त्यसको अर्थ नै 'जुन छ' हुन्छ। यी कारणहरु र मैले भन्न सक्ने अरु अनेक कारणहरुले म यही निष्कर्षमा पुगेको छु, सत्य नै ईश्वर हो। र तपाई सत्यलाई ईश्वरको रूपमा प्राप्त गर्न चाहनु हुन्छ भने त्यसको एउटै मात्र अनविार्य साधन प्रेम अथवा अहिंसा हो। मैले मान्ने गरेको छु, अन्ततः साधन र साध्य समानार्थक शब्द बन्न पुग्छन्, यसकारण मलाई यसो भन्दा संकोच लाग्दैन, ईश्वर प्रेम हुन्।

**प्रश्न** : त्यसो भए सत्य के हो ?

**उत्तर** : प्रश्न त कठिन छ, तर मैले आफ्ना निंति त्यसको समाधान निकालेको छु – त्यो हो हाम्रो अन्तरात्माले जे भन्छ, त्यही सत्य हो। यसमा तपाईले सोध्नु होला, त्यसो भए भिन्न-भिन्न मानिसले भिन्न-भिन्न र एकाअर्काको विरुद्ध सत्यहरुका कल्पना कसरी गर्छन् ?

यसको उत्तर यही छ – मानव-मनले असंख्य माध्यमहरुद्वारा, काम गर्छन् र प्रत्येक मानिसका मनको विकास एकै प्रकारले भएको छैन, यसकारण एकजनाको निंति सत्य भएको अर्कोको निंति असत्य भएको परिणाम त निस्कन्छ नै। यस कारण जो मानिसहरुले यी प्रयोग गरेका छन्, उनीहरु यो निष्कर्षमा पुगेका छन्, यी प्रयोगहरुमा केही शर्तहरु पालन गर्नु आवश्यक छ। जस्तो प्रकारले विज्ञानका क्षेत्रमा प्रयोग गर्ने सबै मानिसहरुका निंति एउटा सामान्य र अनिवार्य पद्धति हुन्छ, त्यस्तै प्रकारले आध्यात्मिक क्षेत्रमा प्रयोग गर्न इच्छा राख्ने मानिसहरुका लागि पनि केही शर्तहरु पालन गर्नुपर्ने आवश्यकता पर्छ। र प्रत्येक मानिसले उसको अन्तरात्माको आवाजले उसलाई आमुक कुरा भनिरहेछ भनेर भन्ने हुनाले तपाईले त्यो आवाजले सुन्नु पर्छ, र तब तपाई जति-जति आफ्ना साधनाका पथमा अघि बढ्नु हुन्छ, तपाईलाई आफ्ना मर्यादाहरुको बोध हुँदै जान्छ। यसकारण सतत अनुभवहरुका आधारमा हाम्रो यो विश्वास बनेको छ, जो मानिस लगनसाथ सत्यको – ईश्वरको – खोजी गर्न चाहन्छ, उसले केही व्रतहरु पालन गर्नुपर्छ।

ती व्रत हुन् – सत्य – अर्थात् सत्य बोल्नु र सत्य नै विचार्नु, ब्रह्मचर्य, अहिंसा, गरीबी र अपरिग्रह। यी सुन्दर व्रतहरुलाई तपाई पालन गर्नु हुन्न भने यो प्रयोग आरम्भ नगरे पनि हुन्छ। यसका लागि अरू पनि केही नियमहरु निर्धारण गरिएका छन्, तर यहाँ म तिनको विवेचना गर्दिनँ। तर जस-जसले यो प्रयोग गरेका छन्, उनीहरु जान्दछन्, प्रत्येक व्यक्तिले आफ्ना अन्तरात्मा आवाज सुन्न सकेको दृढ़ता जनाउनु उचित होइन, र आज संसारका सामु जुन यति धेर असत्य कुरा राखिन लागिएका छन्, त्यो एउटा हैरानीको कुरा हुन पुगेको छ; त्यसको कारण यही हो, प्रत्येक मानिस यो प्रयोगको निंति आवश्यक नियमहरुलाई पालन नगरी आफ्नो अन्तरात्माको आवाज सुनेको कुरा दृढ़तापूर्वक भन्छ। यसकारण म सम्पूर्ण विनम्रतासाथ यति नै निवेदन गर्न सक्छु, जसमा विनय छैन, उसले कहिल्यै सत्यलाई प्राप्त गर्न सक्तैन। तपाईं सत्य-रूपी सागरको सतहमा पौरनु चाहनु हुन्छ भने तपाईंले आफूलाई शून्य बनाउनुपर्छ, आफ्नो अहम पूरै मेटाइ दिनु पर्छ। यो मन्त्र-मुग्ध गरिदिने विषयमाथि आज राति यो भन्दा बढ़ता म केही भन्दिनँ।



25

# भाषण : इलवा सभा, त्रिवेन्द्रममा

मैले महान् पदमनाभ मन्दिरमा जे देखें, त्यसको उल्लेख अवश्य गर्नु पर्छ। विशुद्ध आध्यात्मिक पुनर्जागृतिका विषयमा म जे-जति भनिरहेको छु, त्यो त्यसका उल्लेखले सबभन्दा राम्रोसित स्पष्ट होला। माता-पिताले ममा जस्तो श्रद्धा-भक्ति संचार गरिदिएका थिए, मनमा त्यस्तै श्रद्धा-भक्ति लिएर नै युवावस्थामा म मन्दिरहरुतिर जाने गर्थें। तर यता केही वर्षदेखि म मन्दिर गएको छैनँ र जबदेखि अस्पृश्यता निवारणको काममा लागेको छु, तबदेखि त यस्तो कुनै मन्दिरमा म गएको छैनँ, जुन तथाकथित अस्पृश्यताका निंति खुल्ला छैन। त्यसकारण आज विहान मैले मन्दिरमा जे-जति देखें, त्यसमा मैले यस्तै नवीनता देखें, जस्तो नवीनताको दर्शन ती असंख्य अवर्ण हिन्दूहरुलाई भएको होला, जो घोषणापछि मन्दिरमा गएका छन्। कल्पनाका पखेटाका सहाराले मेरो मन प्रागैतिहासिक कालमा पुग्यो। मानिसमा ईश्वर-बोध जागेका थियो र उसले पाषाण र धातुहरुका मूर्तिहरुमा त्यो बोधलाई अभिव्यक्ति दिन आरम्भ गरेको थियो। मैले स्पष्ट लक्ष गरें, जो पुजारी आफ्नो सुन्दर हिन्दीमा मलाई प्रत्येक प्रतिमाको मर्म बुझाइ रहेको थियो, उ मलाई प्रत्येकमा ईश्वरको निवास भएको भन्नचाहदैनथ्यो। तर प्रतिमाहरुको विशेष व्याख्या नदिई उसले मलाई अनुभव गराई दियो, तिनीहरुमध्ये प्रत्येक मन्दिर त्यो अदृश्य, ईश्वरका विषयमा चिन्तनसम्म गर्नाले हामीलाई सन्तोष लाग्दैन। जुनसुकै कारणले होस, हामी कुनै यस्तो वस्तु चाहन्छौं, जसलाई हामी

20.1.1937, पृष्ट 266-267, खंड—64, गान्धी वाङ्मय

स्पर्श गर्न सक्छौं, जसलाई हामी देख्न सक्छौं र जसका समक्ष श्रद्धापूर्वक विनत हुन सक्छौं। त्यस्तो वस्तु कुनै पुस्तक होस वा ढुंगाका बनाइएको कुनै सुनसान, खालि घर वा ईंटा-ढुंगाको कुनै यस्तो घर, जसमा अनेकौं मूर्तिहरु होऊन् – यसले केही फरक पर्दैन। केही मानिसहरुलाई कुनै पुस्तकले सन्तोष दिन्छ, कसैलाई कुनै खालि-सुनसान घरले र कोही-कोही मानिस तबसम्म सन्तुष्ट हुँदैन, जबसम्म त्यो घरमा उनीहरुले केही प्रतिमाहरू देख्न पाउँदैनन्। त मेरो भनाई यो छ, तपाईहरु यी मन्दिरहरुमा यिनीहरुलाई अन्धविश्वासको घर सम्झेर नजानुहोस। तपाईहरु त्यहाँ श्रद्धापूर्वक जानुभए जतिपल्ट जानुहुन्छ, त्यतिपल्ट त्यहाँबाट शुद्ध भएर र जीवन्त ईश्वरमा आफ्नो आस्थालाई अझ धेर दृढ़ बनाएर बाहिर आउनु हुनेछ।



# 26

# 'गीता' को अर्थ

एकजना मित्रले यसरी प्रश्न गरेका छन् :

'गीता' को सन्देश के हो ? हिंसा कि अहिंसा? यस्तो लाग्छ, यो प्रश्न कहिल्यै समाधान हुने छैन। यो कुरा अर्कै हो, कस्तो प्रकारको संदेश हामी देख्न चाहन्छौं, र यो अर्को कुरा हो, त्यसलाई पढ़नासाथ कस्तो छाप पर्छ ! अहिंसा-तत्त्व नै जीवन-सन्देश हो भन्ने कुरा जसको मनमा जमिएको छ, उसकालागि यो प्रश्न गौण हुनजान्छ। उसले त यही भन्नेछ, 'गीता' बाट अहिंसा निस्कन्छ भने मलाई त्यो ग्राह्य छ। यस्तो भव्य ग्रन्थबाट अहिंसा जस्तो भव्य धार्मिक सिद्धान्त नै निस्कनुपर्छ। निस्कँदैन भने पनि केही हर्जा छैन। हामी 'गीता' लाई आदरसित पूजा गर्छौं, तर त्यसलाई प्रमाण-ग्रन्थ मान्ने छैनौं।

कामको चपारोको बीचबाट केही समय निकालेर तपाईले यसको उत्तर दिनुभए बढ़िया हुनेछ।

यस्ता प्रश्न त हुँदै गर्छन् र जसले केही अध्ययन गरेको छ, उसले त्यसका यथाशक्ति जवाफ पनि दिनुपर्छ। तर यिनका समाधान गरिदिएर पनि आखिरमा यति त भन्नैपर्छ, मानिसले गर्छ त्यही, जसलाई उसको हृदयले गर्नू भन्छ। पहिले हृदय छ, त्यसपछि बुद्धि। पहिले सिद्धान्त, त्यसपछि प्रमाण। पहिले स्फुरण, फेरि

---

12.11.1925, पृष्ट 327-332, खंड—28, गान्धी वाङ्मय

त्यसपछि त्यसको अनुकूल तर्क। पहिले कर्म र त्यसपछि बुद्धि। यसै कारण बुद्धिलाई समर्थन गर्नका निंति उसले प्रमाण पनि खोजेर निकाल्छ।

यसकारण म यो सम्झन्छु, 'गीता' को मेरो अर्थ सबैकालागि अनुकूल नहोला। यस्तो स्थितिमा म यति नै भन्छु, 'गीता' को आफ्नो अर्थसम्म म कसरी पुगें र धर्म-शास्त्रहरुका अर्थ निकाल्नमा मैले कुन-कुन सिद्धान्तहरुलाई राखेको छु, त्यति भए यथेष्ट हुनेछ। 'परिणाम जेसुकै होस, मैले त युद्ध गर्नुपर्छ। जो शत्रु मर्ने योग्य छन्, ती त स्वयं मरिसकेका छन्, मलाई त उनीहरुलाई मार्नका मात्र निमित्त बन्नु छ।'

सन 1889 मा 'गीता' सित मेरो पहिलो परिचय भयो। त्यस वेला मेरो उमेर २० सालको थियो। त्यस समय अहिंसा-धर्मको विषयमा मैले थोरै मात्र बुझेको थिएँ। शत्रुलाई पनि प्रेमले जित्नुपर्छ भन्ने मैले गुजराती कवि शामल भट्टको छप्पय 'पाणी आपे ने पाय भलुं भोजन तो दीजे' बाट सिखेको थिएँ। यसमा निहित सत्य मेरो हृदयमा राम्ररी बसिकेको थियो। तर त्यस समय ममा त्यसबाट जीव-दयाको स्फुरण भएको थिएन। यो भन्दा पहिले मैले देशमै मांसाहार गरिसकेको थिएँ। म मान्छु, सर्प आदिलाई नष्ट गर्नु धर्म हो। मलाई सम्झना भएर आउँछ, मैले उडुस आदि जीवहरु मारेको छु। मलाई त यो पनि याद आउँछ, मैले एउटा बिच्छु पनि मारेको थिएँ। अब म सम्झन लागेको छु, यस्ता विषालु जीवहरुलाई पनि मार्नु हुँदैन। त्यस समय म यो मान्दथें, हामीहरुले अंग्रेजहरुसित सशस्त्र युद्धको निंति तैयारी गर्नुपर्छ। 'अंग्रेजले राज्य गर्छन्, यसमा आश्चर्य के छ !' म यस तात्पर्यको एउटा कविता गुन्गुनाउने गर्थें। मैले मांसाहार यसैको तैयारीको विचारले गरेको थिएँ। बेलायत जानुअघि मेरो यस्तै विचार थियो। म मांसाहार इत्यादिबाट बाँच्न सकें, यसको कारण मातालाई दिइएका वचनहरुलाई मरणपर्यन्त पालन गर्ने मेरो संकल्प थियो। सत्यप्रतिका मेरो प्रेमले धेरैवटा आपत्तिहरुमा मेरो रक्षा गरेको छ।

फेरि दुइजना अंग्रेजहरुसित सम्बन्ध हुँदा मैले 'गीता' पढ्नु परयो। 'पढ्नु परयो' यस कारणले भन्दैछु, किनभने त्यसलाई पढ्ने मलाई कुनै खास इच्छा थिएन। तर जब ती दुई भाइले मसित 'गीता' पढ्ने इच्छा गरे, म लज्जित भएँ। मलाई आफ्ना धर्म-शस्त्रहरुको कत्ति पनि ज्ञान थिएन, त्यो कुराले मलाई बड़ो दुःख लाग्यो। मलाई लाग्छ, त्यो दुःखको कारण अभिमान थियो। 'गीता' का सबै श्लोकहरुको अर्थ कसैको मदद बिनै ठीक-ठीक बुझ्नसक्ने किसिमको संस्कृतको अध्ययन मैले गरेको थिइनँ। यी दुई भाइ त केही पनि बुझ्दैनथे।

तिनीहरुले सर एडविन ऑर्नोल्डको 'गीता' को खूबै राम्रो काव्यानुवाद मेरो सामु राखिदिए। मैले त्यो पुस्तक पढ़िहालें र त्यसमा म मुग्ध भएँ। त्यस समयदेखि आजसम्म दोस्रो अध्यायको अन्तिम 19 वटा श्लोक मेरो हृदयमा अंकित छन्। मेरो निंति त सबै धर्म त्यसैमा रहेको छ। त्यसमा सम्पूर्ण ज्ञान छ। त्यसमा भनिएका सिद्धान्त अचल छन्। त्यसमा बुद्धिको पनि सम्पूर्ण प्रयोग भएको छ। तर यो बुद्धि संस्कारी बुद्धि हो। यसमा अनुभव-ज्ञान छ।

त्यो परिचयपछि मैले धेरैवटा अनुवादहरु पढ़ें, धेरैवटा टीकाहरु पढे, धेरै तर्कहरु गरें र सुनें; तर पहिलोपल्ट पढ़दा जुन छाप ममा बस्यो, त्यो हटेन। यी श्लोक 'गीता' का अर्थ बुझ्ने साँचाहरु हुन्। त्यसमा विरोधी अर्थ भएका वचन कतै पाइए तिनलाई त्यागिदिने म सल्लाह दिन्छु। नम्र र विनयी मानिसले त तिनलाई त्यागून्े आवश्यकतै छैन। अरु श्लोकहरुको आज यससित मेल खाँदैन भने यो मेरो बुद्धिकै दोष हो भनेर उसले भने हुन्छ; समय वित्दै गएपछि यिनको र यी उन्नाइस श्लोकहरुमा भनिएका सिद्धान्तहरुका मेल पाईंदै जान्छन्। आफ्ना मनलाई र अरुलाई यसो भनेर उ निश्चित हुनेछ।

शास्त्रहरुको अर्थ लाउनेमा संस्कार र अनुभवको आवश्यकता पर्छ। 'शूद्रहरुलाई वेदाध्ययन गर्ने अधिकार छैन' - यो सर्वथा भूल छैन। शूद्र अर्थात् असंस्कारी, मूर्ख, अज्ञानी। यस्ता मानिसले वेदादि अध्ययन गरेर तिनलाई अनर्थ गर्नेछन्। बेसि उमेरका पनि सबै मानिस बीजगणितका कठिन प्रश्न आफैले बुझ्ने अधिकारी छैनन्। तिनलाई बुझ्नका निंति पहिले उनीहरुले केही प्रारम्भिक शिक्षा ग्रहण गर्नुपर्छ। व्यभिचारीको मुखमा 'अहं ब्रह्मास्मि' ले के शोभा देला ? उसले त्यसको के अर्थ (वा अनर्थ) लगाउला ?

अर्थात् शास्त्रको अर्थ लाउने मानिस यमादि पालन गर्ने हुनुपर्छ। यमादिको शुष्क पालन जस्तो कठिन छ, त्यस्तै निरर्थक पनि छ। शास्त्रहरुले गुरु हुनु आवश्यक मानेका छन्। तर यो जमानामा त गुरुहरु प्रायः - प्रायः लोप भइसकेका छन्। यसै कारण ज्ञानीहरु भक्ति-प्रधान प्राकृत ग्रन्थहरुको पठन-पाठन गर्ने शिक्षा दिन्छन्। तर जसमा भक्ति छैन, श्रद्धा छैन, उसलाई शास्त्रको अर्थ लाउने अधिकार हुँदैन। विद्वान् मानिसहरूले विद्वतापूर्ण अर्थ त्यसबाट निकालून् सही, तर त्यो शास्त्रार्थ होइन। शास्त्रार्थ त अनुभवीले नै व्यक्त गर्न सक्छन्।

तर प्राकृत मानिसहरुका निंति पनि केही सिद्धान्त त छन् नै। शास्त्रहरुका ती अर्थ जो सत्य-विरोधी छन्, सही हुन सक्तैनन्। जसले सत्यलाई सत्य हुनुमा

नै शंका गर्छ, उसका लागि शास्त्र छँदै छैन; अथवा यसो भनौं, उसका लागि सबै शास्त्र अशास्त्र छन्। कुनैमा समाधान गर्ने शक्ति छैन। जसलाई शास्त्रमध्येबाट अहिंसा प्राप्त हुँदैन, उसका लागि भय छ, तर उसको उद्धार हुँदैन भन्ने कुरा होइन। सत्य स्वीकारात्मक छ, अहिंसा निषेधात्मक छ। सत्य जुन वस्तु हुनुपर्छ, त्यसको साक्षी बन्छ, अहिंसा जुन (बाह्यतः) छ, त्यसलाई निषेध गर्छ। सत्य छ, असत्य छैन। हिंसा छ, अहिंसा छैन। फेरि पनि अहिंसा हुनैपर्छ – यही परम धर्म हो। सत्य स्वयंसिद्ध छ। अहिंसा त्यसको 'सम्पूर्ण फल' हो, सत्यमा त्यो लुकेको हुन्छ। त्यो सत्यझै व्यक्त छैन। त्यस कारण त्यसलाई नमानी मानिसले शास्त्रको जति नै शोध गरे पनि सत्यले अन्त्यमा उसलाई अहिंसाकै पाठ पढ़ाउनेछ।

सत्यकालागि तपश्चर्या त गर्नै पर्छ। सत्यको साक्षात्कार गर्ने तपस्वीले चारैतिर फैलिएको हिंसामध्ये अहिंसा देवीलाई संसारका सामु प्रकट गरेर भने : हिंसा मिथ्या हो, माया हो, र अहिंसा नै सत्यवस्तु हो। ब्रह्मचर्य, अस्तेय, अपरिग्रह पनि अहिंसा कै लागि हो। यी अहिंसालाई सिद्ध गर्ने शक्तिहरु हुन्। अहिंसा सत्यको प्राण हो। त्यो बिना मानिस पशु हुन्छ। सत्यार्थीले आफ्ना शोधका निंति प्रयत्न गर्दै यी सब बड़ो चाँड़ो बुझ्दछ। त्यसपछि उसलाई शास्त्रको अर्थ लाउन कति गाह्रो पर्दैन।

शास्त्रको अर्थ लगाउने अर्को उपाय हो, त्यसका शब्दहरुलाई समातेर बसिरहनु हुँदैन, त्यसको ध्वनिलाई हेर्नुपर्छ, त्यसका मर्मलाई बुझ्नुपर्छ। तुलसीदासको 'रामायण' उत्तम ग्रन्थ हो। किनभने त्यसको ध्वनि हो स्वच्छता, दया, भक्ति। त्यसमा 'शूद्र गंवार ढोल पशु नारी, ये सब ताड़न के अधिकारी' लेखिएको छ, यस कारण कोही पुरुषले आफ्नो स्त्रीलाई कुट्छ भने उसको अधोगति हुन्छ। रामचन्द्रज्यूले सीताज्यूलाई कहिल्यै प्रहार गरेनन्, त्यति मात्र होइन, उनलाई कहिल्यै दुःख दिएनन्। तुलसीदासज्यूले त एउटा प्रचलित वाक्य लेखिदिए। उनलाई यो कुराको कल्पना पनि भएन होला, त्यो वाक्यलाई आधार बनाएर आफ्नो अर्द्धांगिनीलाई कुटने मानिस पशु हुन्छन्। र स्वयं तुलसीदासले दस्तुरका वशवर्ती भएर आफ्नो पत्नीलाई कुटेका भए पनि त्यसले के हुन्थ्यो ? कुट्नु अवश्य दोषपूर्ण कुरा हो। 'रामायण' पत्नीलाई कुटनका निंति होइन, पूर्ण पुरुषको दर्शन गराउनका निंति सती-शिरोमणि सीताज्यूको परिचय गराउनका निंति र भारतको आदर्श भक्तिको चित्र चित्रित गर्न लेखिएको हो। दोषपूर्ण दस्तुरहरुको जुन समर्थन त्यसमा पाइन्छ, त्यो त्याज्य छ। तुलसीदासज्यूले भूगोल सिखाउनका निंति आफ्ना बहुमूल्य ग्रन्थ बनाएको होइनन्, यसकारण उनको

ग्रन्थमा भूगोलका दृष्टिले भूल कुरा पाइन्छन् भने तिनलाई अस्वीकार गर्नु उचित हो।

अब 'गीता' को कुरा लिऊँ। ब्रह्मज्ञान-प्राप्ति र त्यसको साधन यही 'गीता' को विषय हो। दुई सेनाको बीचमा युद्ध हुनु निमित्त मात्र हो। कवि स्वयं युद्धादिलाई निषिद्ध मान्दैनथे भन्ने भनिए पनि र यसकारण उनले युद्धको प्रसंगलाई यस प्रकारले उपयोग गरेका हुन्। तर महाभारत पढेपछि ममाथि अर्कै प्रकारको छाप परेको छ। व्यासज्यूले यति सुन्दर ग्रन्थको रचना गरेर मिथ्यात्वको नै वर्णन गरेका छन्। कौरव हारे त के भयो ? र पाण्डवले जिते त त्यसले पनि के भयो ? विजयी कति बाँचे ? तिनीहरुलाई के भयो ? कुन्ती मातालाई के भयो ? र आज यादव कुल कहाँ छ ?

जहाँ मुख्य विषय युद्ध-वर्णन र हिंसाको प्रतिपादन होइन, त्यहाँ त्यसमाथि जोड़ दिनु अनुचित मात्र मानिन्छ। र केही श्लोकहरुको सम्बन्ध अहिंसासित मेल खाएको देखाउनु कठिन हुन्छ, सम्पूर्ण 'गीता' लाई हिंसाको संघारमा उभ्याउने काम त्यो भन्दा पनि गाह्रो छ।

कविले जब कुनै ग्रन्थको रचना गर्छ, उसले ती सब अर्थहरुको कल्पना गरेको हुँदैन। काव्यको खुबी नै हो, त्यो कविभन्दा पनि अघि बढेको हुन्छ। जुन सत्यलाई उसले आफ्नो तन्मयतामा उच्चारण गर्छ, उसको जीवनमा धेरजसो त्यो आएको हुँदैन। यसकारण धेरैजना कविहरुका जीवन उनीहरुका काव्यसित सुसंगत भएका पाईंदैनन्। 'गीता' को तात्पर्य कुल मिलाएर हिंसा होइन, अहिंसा हो; यो कुरा दोस्रो अध्यायमा, जसबाट विषय आरम्भ हुन्छ र अठाह्रौं अध्याय, जसमा पूर्णाहुति हुन्छ, हेरे प्रतीत हुन्छ। मध्यमा हेर्नुभए पनि यही प्रतीत हुनेछ। बिना क्रोध, राग वा द्वेष हिंसा हुनु संभाव हुँदैन। 'गीता' ले त क्रोधाग्निलाई पार गरी गुणातीतको स्थितिमा पुरयाउने प्रयास गर्छ। गुणातीतमा क्रोधको सर्वथा अभाव रहन्छ। अर्जुनले कानसम्म पुरयाएर जब-जब धनुष ताने, त्यस बेलाका उनका राता-राता आँखा म आज पनि देख्नसक्छु।

अर्जुनले अहिंसाका लागि युद्ध छोड़ने हठ कहिले गरेका थिए। उनले त धेरैवटा युद्ध गरिसकेका थिए। उनलाई त एकाएक मोह भएको थियो र त्यसै कारण उनले आफ्ना सहोदर सम्बन्धीहरुलाई मार्न चाहेका थिएनन्। जसलाई उनी पापी मान्दैनथे, उनीहरुलाई नमार्ने कुरा अर्जुनले कहाँ गरेका थिए ! श्रीकृष्णा त अन्तर्यामी छन्। उनले अर्जुनको यो क्षणिक मोह बुझिहाल्छन्. र यस कारण

उनलाई उनी भन्छन्, तिमीले हिंसा त गरिसकेका छौ। अब यसरी एकाएक बुझकी बन्ने दम्भ गरेर तिमी अहिंसा सिक्न सक्ने छैनौ। यस कारण जुन काम तिमीले आरम्भ गरेका छौ, त्यसलाई तिमीले अब पूरा गर्नैपर्छ।" घण्टामा चालीस माइलको वेगले कुद्ने रेलगाड़ीमा बसेको मानिस एकाएक प्रवाससित विरक्त भएर दगुर्दै गरेको गाड़ीबाट बाहिर कुद्छ भने उसले आत्महत्या गरेको हो भन्नु पर्छ। यसबाट प्रवास वा रेलगाड़ीमा बस्नुको मिथ्यात्वलाई उसले नसिखेको बुझिन्छ। अर्जुनको पनि त्यही हालत थियो। अहिंसक कृष्णाले अर्जुनलाई अर्को सल्लाह दिनै सक्तैनथे। तर त्यसबाट यो अर्थ निस्कँदैन, 'गीता' मा हिंसालाई नै प्रतिपादन गरिएको छ। यस्तो अर्थ निकाल्नु त्यति नै अनुचित हुन्छ, जति यसो भन्नु, शरीर-व्यापारका लागि केही हिंसा अनिवार्य छ र यस कारण हिंसा नै धर्म हो। सूक्ष्मदर्शीले यो हिंसामय शरीरलाई अशरीरी बनाउने अर्थात् मोक्ष प्राप्त गर्ने नै धर्म सिखाउँछ।

तर धृतराष्ट्र को थिए ? दुर्योधन, युधिष्ठिर र अर्जुन को थिए ? कृष्णा को थिए ? के यी सबै ऐतिहासिक पुरुष थिए ? र के 'गीता' मा उनीहरुका स्थूल व्यवहारलाई नै वर्णन गरिएका छन् ? अकस्मात् अर्जुनले सोध्छन् र कृष्णले सम्पूर्ण 'गीता' सुनाइदिन्छन् ? र अर्जुनले, जसको मोह नष्ट भइसकेको छ, या भनेर पनि फेरि भुलिदिन्छन् र कृष्णालाई दोस्रोपल्ट अनुगीता भन्न लाउँछन्।

म त दुर्योधन आदिलाई आसुरी र अर्जुन आदिलाई दैवी वृत्ति मान्दछु। यो शरीर नै धर्म-क्षेत्र हो। यसमा द्वन्द्व चलिरहन्छ र अनुभवी, ऋषि-कविहरुले त्यसका तादृश वर्णन गर्दछन्। कृष्ण त अन्तर्यामी छन् र सँधै शुद्ध चित्तमा घड़ी जस्तो टिकटिक गरिरहन्छन्। चित्तलाई शुद्धिरूपी चाबी दिइएन भने अन्तर्यामीको यद्यपि त्यहाँ निवास छ, तर त्यसको टिक्टिक्-गराइ बन्द भई नै हाल्छ।

भन्नुको आशय यो होइन, यसमा स्थूल युद्धलाई अवकाश नै छैन। जसले अहिंसा बुझेको छैन, उसलाई कायर बन्नुपर्छ भनेर सिखाइएको छैन। जसलाई डर लाग्छ, जसले संग्रह गर्छ, जो विषयमा रत छ, उसले अवश्यनै हिंसामय युद्ध गर्छ। तर त्यो उसको धर्म होइन। धर्म त एउटै छ। अहिंसाको माने हो मोक्ष र मोक्ष सत्यनारायण को साक्षात्कार हो। तर यसमा भाग्नुपर्ने कहीं पनि अवकाश छैन। यो विचित्र संसारमा हिंसा त भइ नै रहन्छ। यसबाट बाँच्ने मार्ग 'गीता' ले देखाउँछ। तर साथ-साथै 'गीता' ले यो पनि भन्छ, भीरु भएर भाग्नाले हिंसाबाट बाँच्न सकिन्न। जसले भाग्ने विचार गर्छ, त्यसले कि त मार्छ कि त्यो आफै मर्छ।

प्रश्नकर्त्ताले जुन श्लोकहरुका उल्लेख गरेका छन्, तिनको रहस्य अझ पनि उनले नबुझे म बुझाउन असमर्थ छु, सर्वशक्तिमान् ईश्वर कर्ता, भर्त्ता र संहर्ता हुन्, र उनी यस्तै हुनुपर्छ। यो विषयमा त कुनै शंका उत्पन्न नहोला। जसले उत्पन्न गर्छ, उसले त्यसलाई नाश गर्ने अधिकार पनि आफूसित राख्छ। तै पनि उनले कसैलाई मार्दैनन्, किनभने उनी अकर्त्ता हुन्, उनले केही पनि गर्दैनन्। नियम यस्तो छ, जसले जन्म लिएको छ, मर्नकालागि जन्म लिएको छ। ईश्वरले यनि यो नियमलाई भत्काँउँदैनन्। यो उनको दया हो। ईश्वर नै स्वच्छन्द र स्वेच्छाचारी बने हामी सबै कहाँ जानू ?



## 27

# भाषण : आरसीकेरेको सार्वजनिक सभामा

श्री कृष्णका जीवनको हामीहरुलाई के सन्देश छ, त्यो हामीलाई थाहा छैन, हामी 'गीता' पढ़दैनौं, हामी आफ्ना नानीहरुलाई 'गीता' पढ़ाउने कुनै प्रयास गर्दैनौं। 'गीता' एउटा यस्तो दिव्य ग्रन्थ हो, जसलाई हरेक धार्मिक विश्वास, हरेक आयु र हरेक देशका व्यक्तिले आदरपूर्वक पढ़न सक्छन् र आफ्ना-आफ्ना धर्मका सिद्धान्त त्यसमा पाउन सक्छन्। हामीले हरेक जन्माष्टमीका दिन कृष्णको ध्यान गरे र 'गीता' पाठ गरे अनि उनले सिखाए झैं काम गर्ने संकल्प गरे हाम्रो अवस्था त्यस्तो दयनीय हुँदैन, जस्तो आज छ। श्रीकृष्णाले जीवनभरि जनताको सेवा गरे। उनी जनताका सच्चा सेवक थिए। उनी कुरुक्षेत्रमा सेनाहरुका संचालन पनि गर्न सक्तथे, तर उनले अर्जुनका सारथी बन्न पनि मन पराए। उनको सम्पूर्ण जीवन कर्मको एउटा अविच्छिन्न 'गीता' नै थियो। उनले घमण्डी दुर्योधनद्वारा भेंट चढ़ाइएका मिष्ठान्नलाई अस्वीकार गरेर विदुरद्वारा विनम्रतापूर्वक भेट चढ़ाइएका साग स्वीकार गरे। श्रीकृष्ण बाल्यावस्थामा गाईहरू चराउँथे र हामी अब पनि उनलाई 'गोपाल' का नाउँले सम्झना गर्छौं। तर उनका उपासकहरुले, हामीहरुले गाईलाई पूर्णतः उपेक्षा गरेका छौं। आदि कर्नाटकका मानिसहरु त गाई मार्छन् र त्यसका मासु खान्छन्। यसैले हामीहरुकहाँ नानी र बिरामीहरुले धरि गाईको दूध पाँउदैनन्। कृष्णका जीवनमा निद्रा वा बेकारीलाई कुनै ठाउँ थिएन। उनको सतत जागरूक दृष्टि विश्वमाथि रहन्थ्यो। तर हामी उनका वंशज अब अल्छे

---

1.9.1927, पृष्ट 410-411, खंड 34, गान्धी वाङ्मय

भएका छौं र आफ्ना हातले काम गर्नु नै बिर्सिसकेका छौं। भगवान् कृष्णाले 'भगवद्गीता' मा हामीलाई भक्तिको मार्ग देखाएका छन् जुन कर्म-मार्ग नै हो। लोकमान्य तिलकले हामीलाई भनेका छन्-हामी चाहे भक्त बन्ने इच्छुक हौं वा ज्ञानी बन्ने, त्यसलाई प्राप्त गर्ने एउटै मार्ग छ - कर्म, तर त्यो स्वार्थको निंति होइन, परमार्थको निंति हुनुपर्छ। स्वार्थको दृष्टिले गरिएको कर्म व्यक्तिको निंति बन्धनकारी हुन्छ, जब कि परमार्थका लागि गरिएको कर्मले उसलाई बन्धनबाट मुक्त गरिदिन्छ। यस्तो कुन चाँहि निःस्वार्थ कर्म हुनसक्छ, जसलाई हिन्दू, मुसलमान, ईसाई, पुरूष, स्त्री र बालक-बालिका सबैले समान रूपले गर्नसक्छन् ? यस्तो यज्ञ-रूप कर्म कताई नै हुनुसक्छ भन्ने मैले सिद्ध गर्ने कोशिश गरेको छु, किनभने यही कार्य हो, जसलाई हामी ईश्वरका नाउँमा गरीब जनताका निंति गर्न सक्छौं र जसले जनताका शिथिल अंगहरुलाई सक्रिय बनाउन सक्छ। भगवान् कृष्णले हामीलाई यो पनि सिखाएका छन्, यो सत्य हो भने हिन्दू-धर्ममा फेरि अस्पृश्यतालाई कुनै स्थान हुनुहुँदैन। आज पनि तपाई यो अन्धविश्वाससित टाँसिइ रहनु हुन्छ भने तपाईंले आज जन्माष्टमीको यो पवित्र दिनमा यसलाई त्यागेर आत्म-शुद्धि गर्नुपर्छ। 'गीता' मा साँचो निष्ठा राख्ने कोही पनि व्यक्तिले हिन्दू र मुसलमानको बीचमा भेदभाव राख्दैन, किनभने भगवान् कृष्णाले भनेका छन्, जसले जुन नाउँले ईश्वरको उपासना गरे पनि उसको उपासना सच्चा छ भने त्यो उनैको उपासना हो। 'गीता' मा प्रतिपादित भक्ति, कर्म वा प्रेमको मार्गमा मानिसलाई घृणा गर्ने कुनै स्थान छैन।



28

# अनासक्तियोग

अब म 'गीता' को अर्थमा आउँछु।

सन् 1888-89 मा मैले पहिलोपल्ट 'गीता' को दर्शन पाएँ, त्यो ऐतिहासिक ग्रन्थ होइन तर त्यसमा भौतिक युद्धको वर्णनलाई निमित्त बनाएर प्रत्येक मानिसको हृदयमा निरन्तर चलिरहने द्वन्द्व-युद्धको नै वर्णन गरिएको छ भन्ने मलाई लागेको थियो। मानव-योद्धाहरुको रचना हृदयभित्रको युद्धलाई रसमय बनाउनका लागि गरिएको कल्पना हो। मनमा उत्पन्न यो प्राथमिक स्फुरण धर्मको र 'गीता' को विशेष चिन्तन-मनन गरेपछि पक्का भयो। 'महाभारत' पढेपछि मेरो यो विचार अझ दृढ भएर गयो। 'महाभारत' ग्रन्थलाई म आधुनिक अर्थमा इतिहास मान्दिँन। आदिपर्वमा नै यो कुराको प्रबल प्रमाण छ। पात्रहरुका अमानुषी र अतिमानुषी उत्पत्तिको वर्णन गरेर व्यास 'भगवान्' ले राजा औ प्रजाका इतिहासको अस्तिलाई समाप्त गरिदिएका छन्। 'महाभारत' मा वर्णित पात्र मूलतः ऐतिहासिक होलान् पनि तर व्यास भगवान्ले त तिनीहरुको उपयोग धर्मको दर्शन गराउनका लागि मात्र गरेका छन्।

महाभारतकारले भौतिक युद्धको आवश्यकतालाई सिद्ध गरेका छैनन्, तर त्यसको निरर्थकता सिद्ध गरेका छन्। विजेताहरुलाई उनले रून लगाएका छन्, पश्चाताप गराएका छन् र उनीहरुका जीवनमा दुःख सिवाय केही पनि रहन दिएका छैनन्।

---

6.8.1931, पृष्ट 94-99, खंड—41, गान्धी वाङ्मय

यो महाग्रन्थ 'महाभारत' मा 'गीता' को स्थान सर्वोच्च छ। त्यसको दोस्रो अध्यायले भौतिक युद्धको व्यवहार सिखाउनका सट्टामा स्थितप्रज्ञका लक्षण सिखाएको छ। स्थितप्रज्ञको सांसारिक युद्धसित कुनै सम्बन्ध हुँदैन, यो कुरा त त्यसका लक्षणहरुमा निहित भएको देखें। परिवारको मामुली झगड़ाको औचित्य वा अनौचित्यको निर्णयकालागि 'गीता' जस्तो पुस्तक रचिएको होइन।

'गीता' का कृष्ण मूर्तिमान् शुद्ध – सम्पूर्ण ज्ञान हुन्, तर उनी काल्पनिक छन्। यहाँ मेरो हेतु कृष्ण नाउँका अवतारी पुरूषको निषेध होइन। म यति मात्र भन्न चाहन्छु, परिपूर्ण कृष्णा काल्पनिक हुन्, उनमा सम्पूर्ण अवतारको आरोपण पछि भएको हो।

अवतारको अर्थ हो, शरीरधारी विशिष्ट पुरुष जीव मात्र ईश्वरका अवतार हुन्, तर लौकिक भाषामा हामी सबैलाई अवतार भन्दैनौ। जो पुरुष आफ्ना युगमा सबभन्दा श्रेष्ठ धर्मवान् पुरूष हुन्छ, उसलाई भविष्यका प्रजाले अवतारका रूपमा पूजा गर्छन्। यसमा म कुनै दोष देख्दिनँ। यसले न त ईश्वरको महत्तामा लांछन लाग्छ, औ न सत्यलाई नै आघात पर्छ। . . . "आदम खुदा होइन, तर खुदाका 'नूर' बाट आदम पृथक छैन।" जो पुरुषमा आफ्ना युगमा सबभन्दा धेर धर्म-जागृति हुन्छ, त्यसलाई विशेषावतार मानिन्छ। यो विचार-सरणीअनुसार आज हिन्दू-धर्ममा कृष्ण-रूपी परिपूर्ण अवतार चक्रवर्ती सम्राट हुन्।

अवतारमा यो विश्वास मानिसको अन्तिम उदात्त आध्यात्मिक अभिलाषाको सूचक हो। ईश्वर-रूप नभई मानिसले सुख पाउँदैन। शान्तिको अनुभव हुँदैन। ईश्वर-रूप बन्नका निंति गरिने प्रयत्नको नै नाउँ साँचो र एक मात्र पुरुषार्थ हो र त्यही आत्मदर्शन हो। यो आत्मदर्शन जसरी समस्त धर्मग्रन्थको विषय हो, त्यसरी नै 'गीता' को पनि हो। तर गीताकारले 'गीता' को रचना यो विषयलाई प्रतिपादन गर्नका निंति गरेका छैनन्। 'गीता' को उद्देश्य आत्मार्थीलाई आत्मदर्शन गराउने एउटा अद्वितीय उपाय भनिदिनु हो। जुन कुरा हिन्दू-धर्मग्रन्थहरुमा जता-ततै छरिएका देखा पर्छन्, तिनलाई 'गीता' ले अनेकौं रूपमा, अनेकौं शब्दमा, पुनरूक्तिको दोष किनेर पनि राम्ररी स्थापित गरेका छन्।

यो अद्वितीय उपाय हो कर्मका फलको त्याग।

यसै केन्द्रबिन्दुका चारैतिर 'गीता' को सम्पूर्ण विषय गुँथिएको छ। भक्ति, ज्ञान आदिले यो केन्द्रबिन्दुका छेउछाउ तारा-मण्डलका रूपमा आफ्ना आफ्ना उचित स्थान ग्रहण गरेका छन्। जहाँ देह छ, त्यहाँ कर्म त हुन्छ नै। कर्मबाट

कोही मानिस मुक्त छैन। तै पनि सबै धर्महरुले प्रतिपादन गरेका छन्, देहलाई प्रभुको मन्दिर बनाउनाले त्यसद्धारा मुक्ति प्राप्त हुन्छ। तर प्रत्येक कर्ममा केही-न-केही दोष त हुन्छ नै। अनि मुक्ति केवल निर्दोष मानिसले मात्र पाउँछ। तब कर्मका बन्धनबाट अर्थात् दोषको स्पर्शबाट कसरी छुटकारा पाउन सकिन्छ ? यी प्रश्नका उत्तर 'गीता' ले निश्चयात्मक शब्दहरुमा दिएको छ : "निष्काम कर्म गरेर, यज्ञार्थ कर्म गरेर; कर्मका फललाई त्याग गरेर, सबै कर्म कृष्णापर्ण गरेर – अर्थात् मन, वचन र कायालाई ईश्वरमा होम गर।"

तर निष्कामना, कर्मफलको त्याग मुखले भनिदिएर मात्र सिद्ध हुँदैन। त्यो केवल बुद्धिको प्रयोग होइन। त्यो त हृदय-मन्थनबाट नै उत्पन्न हुन्छ। यो त्यागशक्तिलाई उत्पन्न गर्न ज्ञान हुनु आवश्यक छ। एक प्रकारको ज्ञान अनेकौं पण्डितहरुले प्राप्त त गर्दछन्, वेदादि उनीहरुलाई कंठाग्र हुन्छन्, तर तिनीहरुमध्ये धेर-जसो भोगादिमा लिप्त रहन्छन्। ज्ञानको अतिशयताले शुष्क पाण्डित्यको रूप नलेओस् भन्ने सोचेर गीताकारले ज्ञानसंगसँगै भक्ति मिसाइदिए र त्यसलाई प्रथम स्थान दिए। भक्तिरहित ज्ञानले विकृत रूप लिनसक्छ। यसकारण उनले भनेका छन्, 'भक्ति गरे ज्ञानको प्राप्ति हुन्छ नै'। तर भक्ति त 'सिरको सौदा' हो। अतः गीताकारले भक्तका लक्षण स्थितप्रज्ञका लक्षणहरु जस्ता देखाएका छन्।

यसकारण 'गीता' को भक्ति कुनै बौलाहापन होइन, अन्धश्रद्धा पनि होइन। 'गीता' मा देखाइएको भक्तिका बाहिरी चेष्टाहरु वा क्रियाहरुसित अत्यन्तै कम सम्बन्ध छ। माला, तिलक, अर्ध्य आदि साधनाहरुको प्रयोग भक्तले गर्लान् तर यी भक्तिका लक्षण होइनन्। जसले कसैसित द्वेष गर्दैन, जो करूणाको भण्डार हो, जो अहन्ता र ममताबाट मुक्त छ, जसका लागि सुख-दुःख, सर्दी-गर्मी समान छन्, जो क्षमावान् छ, जो सँधै सन्तुष्ट रहन्छ, जसको निश्चय कहिल्यै बद्लँदैन, जसले आफ्ना मन र बुद्धि ईश्वरलाई अर्पण गरिदिएको छ, जससित मानिस त्रस्त हुँदैन, जो मानिसहरु डराँउदैन, जो हर्ष-शोक-भय आदिबाट मुक्त छ, जो पवित्र छ, जो कार्यदक्ष भएर पनि तटस्थ छ, जसले शुभाशुभलाई त्याग गरेको छ, जसले शत्रु र मित्र दुवैसित समानभाव राख्छ, जसको दृष्टिमा मान र अपमान समान छन्, जो प्रशंसाले आनन्दित हुँदैन र निन्दाले खिन्न हुँदैन, जसले मौन धारण गरेको छ, जसलाई एकान्त प्रिय छ र जसको बुद्धि स्थिर छ, त्यो भक्त हो।

यस्तो भक्ति आसक्त स्त्री-पुरुषहरुमा संभव छैन।

यसबाट हामी देख्छौं, ज्ञान प्राप्त गर्नु, भक्त हुनु नै आत्मदर्शन हो। आत्मदर्शन यसभन्दा भिन्न अरु वस्तु होइन। जसरी रूपियाँ खर्च गरेर विष पनि किन्न सकिन्छ

र अमृत जस्तो लाभकारी वस्तु पनि, त्यसरी ज्ञान अथवा भक्तिका सट्टामा बन्धन पनि प्राप्त गर्न सकिन्छ र मोक्ष पनि प्राप्त गर्न सकिन्छ भन्ने होइन। यहाँ साधना र साध्य पूर्णतया एउटै होइन भने पनि प्रायः एउटा नै हो। साधनको पराकाष्ठा नै मोक्ष हो। र 'गीता' को मोक्षको अर्थ हो परम-शान्ति।

तर यस्ता ज्ञान र यस्ता भक्तिले कर्मफलको त्यागको कसीमा ठीक ठहरिनुपर्छ। साधारण मानिसहरुका कल्पनामा शुष्क पण्डित पनि ज्ञानी मानिन्छ। त्यसका लागि कुनै काम गर्ने आवश्यकता छैन। लोहोटा जस्तो वस्तु उचाल्नु पनि उसका लागि कर्म-बन्धनको कारण बनिदिन्छ। यज्ञशून्य मानिस जहाँ ज्ञानी मानिन्छ, त्यहाँ लोहोटा उचाल्ने जस्तो तुच्छ लौकिक क्रियाको स्थान नै कसरी हुनसक्छ ?

साधारण मानिसहरुका कल्पनामा भक्त त्यो हो, जो भगवान्‌को भक्तिमा बौलाहा बन्छ, माला हातमा लिएर भगवान्‌को नाउँ जप्छ, सेवाका काम गर्दा पनि जसको माला जप्ने काममा बाधा पर्छ, यसकारण जसले खान-पिन जस्ता भोग खाने बेलामा मात्र माला हातबाट छोड्छ – चक्की चलाउनकालागि वा बिरामीको सेवा-चाकरी गर्नका लागि कहिल्यै छोड्दैन।

यस्ता ज्ञानी र यस्ता भक्तहरुका विषयमा 'गीता' ले स्पष्ट शब्दमा भनिएको छ : 'कर्म बिना कसैले सिद्धि प्राप्त गरेको छैन। जनक आदि पनि कर्मद्वारा ज्ञानी बने। मैंले पनि आलस्यहीन भएर कर्म नगरे यी सम्पूर्ण श्लोकहरुको नाश हुन्छ।' यसो भएपछि साधारण मानिसहरुका बारेमा के भन्ने?

तर एकातिर कर्म मात्र बन्धन-रूप हो भन्ने निर्विवाद छ। अर्कोतिर देहधारी मानवले इच्छा वा अनिच्छाले कर्म गरिरहन्छ। शरीर वा मनको प्रत्येक चेष्टा कर्म हो। त्यसो भएपछि कर्म गर्दै पनि मानिस बन्धनबाट मुक्त कसरी हुनसक्छ ? जतिसम्म मलाई थाहा छ, यो समस्याको निराकरण जस्तो 'गीता' ले गरेको छ, त्यस्तो अरु कुनै धर्म-ग्रन्थले गरेको छैन। 'गीता' ले भन्छ, 'फलको आसक्ति छोड़ेर कर्म गर', 'आधाररहित भएर कर्म गर', 'निष्काम बनेर कर्म गर'। 'गीता' को यो यस्तो ध्वनि हो, जसलाई विर्सनसकिन्न। जो मानिसले कर्मलाई छोड्छ, त्यसको पतन हुन्छ। कर्म गर्दै पनि जसले फल छोड़िदिन्छ, त्यो माथि पुग्छ।

फल-त्यागको अर्थ परिणामको विषयमा लत्ता छाड्नु होइन। परिणाम र साधनको विषयमा विचार गर्नु र दुवैको ज्ञान हुनु अत्यन्त आवश्यक छ। यति गरिसकेपछि जो मानिस परिणामको इच्छा नगरी साधनमा तन्मय रहन्छ, उ फलत्यागी कहलाउँछ।

तर यहाँ फलत्यागको कसैले यस्तो अर्थ लाउनुहुँदैन, जसले गर्दा त्यागीले कर्मको फल पाउँदैन भन्ने बुझियोस्। 'गीता' मा यस्ता अर्थको निंति कुनै स्थान छैन। फलत्यागको अर्थ हो फलको विषयमा आसक्तिको अभाव। वास्तवमा फल त्याग गर्नेहरुले हजार गुणा फल पाउँछ। 'गीता' को फलत्यागमा त मानिसको अनन्त श्रद्धाको परीक्षा छ। जो मानिस परिणामतिर ध्यान दिन्छ, उ अधिकतर कर्म-कर्त्तव्य-भ्रष्ट हुन्छ। उ अधीर बन्छ, यस कारण क्रोधको वशमा हुन्छ र पछि उसले अयोग्य कर्म गर्न थाल्छ। एउटा कर्मबाट अर्को कर्ममा र अर्को कर्मबाट अझ अर्को कर्ममा फँस्दै रहन्छ। कर्मको परिणामको चिन्तन गर्ने मानिसको स्थिति विषयले अन्धा भएको मानिसको जस्तो हुन्छ र अन्त्यमा उसले विषयी मानिसले जस्तो राम्रो-नराम्रो, नीति-अनीतिको विवेक छोड़िदिन्छ र फल पाउनका निंति जस्तो सुकै साधनलाई काममा लाउनु धर्म मात्र थाल्छ।

फलासक्तिका यस्ता तीता परिणामले गर्दा गीताकारले अनासक्ति अर्थात् कर्मफल-त्यागको सिद्धान्त निकाले र त्यसलाई दुनियाँका सामु अत्यन्त आकर्षक भाषामा राखे।

सामान्यतः यो मानिन्छ, धर्म र अर्थ परस्पर-विरोधी हुन्। 'व्यापार आदि सांसारिक व्यवहार आदिमा धर्मको पालन हुन सक्तैन, धर्मकालागि स्थान हुन सक्तैन, धर्मको उपयोग मोक्षकालागि मात्र गर्नसकिन्छ। धर्मको ठाँउमा धर्म सुहाउँछ, अर्थको स्थानमा अर्थ सुहाउँछ।' म मान्छु, गीताकारले यो भ्रमलाई हटाइदिएका छन्। उनले मोक्ष र सांसारिक व्यवहारका बीचमा यस्तो कुनै भेद राखेनन् तर धर्मलाई व्यवहारभित्र ल्याएका छन्। जुन धर्म व्यवहारभित्र आउन सक्तैन, त्यो धर्म नै होइन – यो कुरा 'गीता' मा भनिएको छ, यस्तो मलाई लागेको छ। अतः 'गीता' का मतानुसार जुन कर्म आसक्तिबिना हुन सक्तैनन्, ती सब त्याज्य छन्, छोड़िदिनु योग्य छन्। यो स्वर्ण-नियमले मानिसलाई अनेकौं धर्म-संकटहरुबाट बचाएको छ। यो मतानुसार हत्या, मिथ्या, व्यभिचार आदि कर्म स्वभावले नै त्याज्य हुन्छन्। यसले मनुष्य-जीवन सरल बन्छन् र सरलताबाट शान्तिको जन्म हुन्छ।

यो विचारसरणीलाई अनुसरण गर्दा मलाई लागेको छ, 'गीता' को शिक्षाको आचरण गर्ने मानिसले स्वभावले नै सत्य र अहिंसालाई पालन गर्नुपर्छ। फलासक्तिको अभावमा त मानिसलाई झूठा बोल्ने लोभ हुन्छ औ न त हिंसा गर्ने लोभ हुन्छ। हिंसा वा असत्यका कुनै पनि कार्यको हामीले विचार गरे थाहा लाग्नेछ, त्यसको पछिल्तिर परिणामको इच्छा रहेको हुन्छ।

तर अहिंसाको प्रतिपादन गर्नु 'गीता' को विषय होइन, किन भने 'गीता' को समयभन्दा पहिले पनि अहिंसालाई परमधर्म मानिन्थ्यो। 'गीता' लाई त अनासक्तिको सिद्धान्तलाई प्रतिपादित गर्नु छ। 'गीता' को दोस्रो अध्यायमा नै यो कुरा स्पष्ट भएको छ।

'गीता' अहिंसा स्वीकार्य थियो वा अनासक्तिमा अहिंसा सहज रूपमै पसेको हुन्छ भने गीताकारले भौतिक युद्धलाई उदाहरणका रूपमा किन लिए ? यसको उत्तर हो, गीता-युगमा अहिंसालाई धर्म मानिन्थ्यो र पनि त्यो कालमा भौतिक युद्ध सर्वमान्य वस्तु थियो, यसकारण गीताकारले यस्ता युद्धका उदाहरण लिनमा कुनै संकोच मानेनन्, संकोच हुन पनि सक्तैनथ्यो।

तर फलत्यागको महत्वको अन्दाज लगाउँदा गीताकारका मनमा कस्ता विचार थिए, उनले अहिंसाका मर्यादा कहाँ बाँधे, यिनको विचार गर्ने हामीलाई आवश्यकता छैन। कहिले महत्वपूर्ण सिद्धान्त संसारका सामु राख्छन्, यस कारण आफूले दिएका सिद्धान्तको महत्वलाई सँधै पूरा तौरले जानेका हुन्छन् अथवा जानेपछि त्यसलाई पूर्णतया भाषामा प्रकट गर्न सक्तछन्, यसो भएको हुँदैन। यसैमा काव्य र कविको महिमा छ। कविका अर्थको त कहिल्यै अन्त्य हुँदैन।

जसरी मानिसको विकास भइरहन्छ, त्यसरी नै महाकाव्यहरुका अर्थको पनि विकास हुँदै जान्छ। भाषाहरुका इतिहासको जाँच गरे हामी देख्छौं, अनेकन् महान् शब्दहरुका अर्थ सँधै बदलि वा विस्तृत भइरहन्छन्। गीताकारले स्वयं महान् रूढ शब्दहरुका अर्थहरुका विस्तार गरेका छन्। 'गीता' लाई माथि-माथिबाट मात्र जाँच गरे पनि यो हामी देख्छौं।

गीता-युगभन्दा पहिले यज्ञमा पशुहरुको हिंसा शायद मान्य सम्झिएको थियो। तर 'गीता' को यज्ञमा त्यसको गन्ध पनि आउँदैन। 'गीता' मा त जपयज्ञलाई सबै यज्ञहरुका राजा भनिएको छ। 'गीता' को तेस्रो अध्यायले भन्छ, यज्ञको अर्थ हो मुख्यतः परोपकारकालागि शरीरको उपयोग। तेस्रो र चौथो अध्यायलाई एकैचोटि पढे यज्ञका अरु व्याख्याहरु पनि निकाल्न सकिन्छ। तर पशु-हिंसाको अर्थ कहिल्यै निकाल्न सकिन्न।

'गीता' को सन्यास शब्दको अर्थका विषयमा पनि यही भन्नसकिन्छ। कर्म मात्रको त्याग 'गीता' को सन्यासलाई सह्य छैन। 'गीता' को सन्यासी अतिकर्मी छ र पनि अति-अकर्मी छ। यसरी गीताकारले महान् शब्दहरुका व्यापक अर्थ निकाल्ने कुरा हामीलाई सिखाएका छन्। कर्मका फललाई सम्पूर्ण त्याग गर्ने

मानिसद्धारा भौतिक युद्ध हुनसक्तछ, यस्तो अर्थ गीताकारका भाषाका अक्षरहरु – शब्दहरुबाट ननिस्के पनि 'गीता' का शिक्षालाई पूर्ण रूपले व्यवहारमा ल्याउने प्राय : 40 वर्षसम्म सतत प्रयास गर्दै मलाई त नम्र भावले यस्तो लाग्यो, सत्य र अहिंसालाई सम्पूर्ण पालन नगरी कर्मका फलको सम्पूर्ण त्याग मानिसको निंति असंभव छ।

'गीता' कुनै सूत्र-ग्रन्थ होइन। 'गीता' एउटा महान् धर्म-काव्य हो। हामी यसमा जति भित्रसम्म जान्छौं, त्यति नै त्यसबाट नयाँ र सुन्दर अर्थ हामीले पाउँछौं। 'गीता' जन-समाजका लागि हो, त्यस कारण त्यसमा एउटै कुरालाई धेरै प्रकारले भनिएको छ। 'गीता' मा परेका महान् शब्दहरुका अर्थ प्रत्येक युगमा बदलन्छन् र व्यापक बन्दै जानेछन्, तर 'गीता' को मूल मन्त्र कहिल्यै बद्लँदैन। यो मन्त्रलाई जुन प्रकारले जीवनमा साध्य बनाइन्छ, त्यही रीतिलाई दृष्टिमा राखेर जिज्ञासुले 'गीता' का महाशब्दहरुका इच्छानुसार अर्थ लाउनसक्छन्।

'गीता' विधि-निषेध (गर्नु योग्य र अयोग्य कर्म) भनिदिने संग्रह-ग्रन्थ पनि होइन। एकजना मानिसको निंति जुन कर्म विहित (गर्नु योग्य) छ, त्यो आर्को मानिसको निंति निषिद्ध (गर्नु योग्य) हुनसक्छ। एउटा काल वा एउटा देशमा जुन कर्म विहित हुन्छ, त्यो अर्को काल वा अर्को देशमा निषिद्ध हुन सक्तछ। अतः निषिद्ध केवल फलासक्ति हो, र विहित अनासक्ति हो।

'गीता' मा ज्ञानको महिमा गाइएको छ। तै पनि 'गीता' बुद्धिगम्य छैन, त्यो हृदयगम्य छ। यस कारण यो अश्रद्धालु मानिसका निंति होइन। गीताकारले स्वयं नै भनेका छन् –

"जो मानिस तपस्वी छैन, जो भक्त होइन, जसले सुन्ने इच्छा राख्दैन र जसले मसित द्वेष राख्छ, उसलाई तिमी यो (ज्ञान) कहिल्यै नभन। तर जो मानिसले यो परमगुह्य ज्ञान मेरा भक्तहरुलाई दिन्छ, उसले मेरो परम भक्ति गर्नाका कारणले कुनै सन्देह बिना मलाई प्राप्त गर्नेछ। यसबाहेक जो मानिस द्वेष रहित भएर जहाँ पुण्यावान् मानिसहरु बस्छन्, शुभलोक त्यसले प्राप्त गर्नेछ।" (अध्ययन-18, श्लोक 67, 68, 71)



29

# भक्तियोग

म त आफ्ना सबै कठिनतामा गीता-माताकहाँ कुद्छु र अबसम्म आश्वासन पाउँदै आएको छु। अरुलाई पनि, जो ती मध्ये आश्वासन पाउने इच्छुक छन्, शायद, जुन रीतिले म त्यसलाई दिन्हौं बुझ्दछु, त्यो रीति जानेर उनीहरुले केही धेर मदद पाउनसक्छन्। त्यो रीतिलाई जानेर उनीहरुले केही नयाँ प्रकाश पाउनु पनि असंभव छैन।

आज म बाह्रौं अध्यायको सार दिन चाहन्छु। यो भक्तियोग हो। विवाहका अवसरमा दम्पतिलाई पाँचवटा यज्ञहरूमध्ये यसलाई पनि एउटा यज्ञका रूपमा कंठ गरेर मनन गर्नुपर्छ। भनेर हामी भन्छौं। बिना भक्ति ज्ञान तथा कर्म शुष्क हुन्छन् र ती बन्धन-रूप हुनजाने संभावना छ। यस कारण भक्ति-भावले 'गीता' को मनन आरम्भ गर्नुपर्छ।

अर्जुनले भगवान्सित सोधे; साकार र निराकारलाई पुज्ने भक्तहरूमा धेर श्रेष्ठ को हुन्?

भगवान्ले उत्तर दिए : जसले मेरा साकार रूपलाई श्रद्धापूर्वक मनन गर्छन्, त्यसमा जो लीन हुन्छन्, ती श्रद्धालु मेरा भक्त हुन्। जसले निराकार तत्त्वलाई भज्छन् र त्यसलाई भज्नका निंति समस्त इन्द्रियहरुलाई संयम गर्छन्, सबै जीवहरुप्रति समभाव राख्छन्, उनीहरुका सेवा गर्छन्, कसैलाई ऊँच-नीच गन्दैनन्, उनीहरुले मलाई पाऊछन्। यस कारण यो भन्न सकिन्न, दुवैमा अमुक श्रेष्ठ छ,

---

4.11.1930, पृष्ट 273-274, खंड—44, पृष्ट 131-132, खंड—49, गान्धी वाङ्मय

तर निराकारको भक्ति शरीर धारीद्वारा सम्पूर्ण रूपले हुनु अशक्य मानिन्छ, निराकार निर्गुण हो, अतः मानिसको कल्पनाभन्दा टाड़ा हुन्छ। अतः सबै देहधारी जानी-नजानी साकारका नै भक्त हुन्। यस कारण तिमी त मेरो साकार विश्वरूपमा नै आफ्नो मन लगाऊ। सबै उसलाई जिम्मा लाऊ। यसो गर्न सक्दैनौ भने चित्तका विकारहरुलाई रोक्ने अभ्यास गर। अर्थात् यम-नियम आदिलाई पालन गरेर प्राणायाम, आसन आदिको मदद लिएर मनलाई वशमा राख। यसो गर्न पनि नसकिए जे-जति गरिन्छ, मेरै लागि गरिन्छ, यो धारणाले आफ्ना सबै काम गरयौ भने तिम्रो मोह, मेरो ममता क्षीण हुदै जानेछ र त्यति-त्यति तिमी निर्मल-शुद्ध हुँदै जानेछौ र तिमीमा भक्तिरस आउनेछ। यो पनि हुन नसके कर्म मात्रका फललाई त्यागि देऊ, अर्थात् फलको इच्छा छोडिदेऊ। तिम्रो भागमा जुन काम आइपर्छ, त्यसलाई गर्दै जाऊ। फलको मालिक मानिस हुनै सक्तैन। धेरै कुराहरु एकत्र भएपछि फल निस्कन्छ, अतः तिमी त निमित्त मात्र बन। जुन चार रीतिहरु मैले भनें, तिनमा कुनैलाई कम-बेसि नठान। यिनमा जुन तिमीलाई अनुकूल लाग्छ, त्यसबाट तिमीले भक्तिको रस लेऊ। यस्तो लाग्छ, माथि जुन यम-नियम, प्राणायाम, आसन आदिको मार्ग भन्दै आएको छु, त्यसको अपेक्षा श्रवण-मनन आदिको ज्ञान-मार्ग सरल छ। त्यसको अपेक्षा उपासना-रूप ध्यान सरल छ र ध्यानको अपेक्षा कर्म-फल-त्याग सरल छ। सबका निंति एउटै वस्तु समान भावले सरल हुँदैन र कसै-कसैलाई सबै मार्ग लिनुपर्ने हुन्छ। ती एकाअर्कासित मिलेकै हुन्छन् जुनै मार्गबाट होस, तिमीलार्ह त भक्त हुनुपरेको छ। जुन मार्गबाट भक्ति हुन्छ, त्यही मार्गलाई अपनाऊ।

म तिमीलाई भक्तका लक्षण भन्छु : भक्तले कसैमाथि द्वेष राख्नु हुँदैन, कसैसित वैर-भाव राख्नु हुँदैन, जीव मात्रप्रति मैत्री-भाव राख्नुपर्छ, जीव मात्रसित करूणाको अभ्यास गनुपर्छ, यसो गर्नका निंति ममता छोड्नुपर्छ, आफूलाई मेटाएर शून्यवत् हुनुपर्छ, दुःख सुखलाई समान मान्नुपर्छ। कसैले द्वेष गरे उसलाई क्षमा गर्नुपर्छ (स्वयं आफ्ना दोषहरुकालागि उ संसारबाट क्षमाको भोको छ भन्ने ठानेर) सन्तोषी हुनुपर्छ, आफ्ना शुभ निश्चयहरुबाट कहिल्यै विचलित हुनुहँदैन। मन-बुद्धिसहित सर्वस्व मलाई अर्पण गनुपर्छ। मानिसहरुले उसित उद्वेग राख्नुहुदैन, उसित मानिसहरु डराउनु पनि हुदैन, उ स्वयंले मानिसहरुसित दुःख मान्नु हुँदैन, डराउनु हुँदैन। मेरा भक्तहरु हर्ष, शोक, भय आदिबाट मुक्त भएका हुन्छन्। उसलाई कुनै प्रकारको इच्छा हुँदैन, उ पवित्र हुन्छ, कुशल हुन्छ, उसले ठूलठूला आरम्भलाई, त्यागेको हुन्छ। निश्चयमा दृढ़ हुँदा-हुदै पनि शुभ र अशुभ परिणाम दुवैलाई उसले

त्याग गर्छ, अर्थात् तिनका बारेमा निश्चिन्त रहन्छ। उसकोलागि शत्रु को र मित्र को ? उसलाई के मान, के अपमान ? उसले त मौन धारण गरेर जे पाउँछ, त्यसैमा सन्तोष गरेर एकलो जस्तो भएर विचारण गर्दै सबै स्थितिहरुमा उ स्थिर भएर बस्छ। यसरी श्रद्धालु भएर काम गर्ने मानिस मेरो प्रिय भक्त हो।



# 30

## गीतावाचक

'हरिजन' का पाठक जान्दछन्, मेरालागि 'गीता' को कस्तो महत्व छ। म 'गीता' जस्तो ग्रन्थलाई कण्ठस्थ गर्न उहिलेदेखि नै अत्यन्त वांछनीय मान्दै आएको छु। तर मैले स्वयं अनेकौं प्रयत्न गर्दा पनि 'गीता' का सबै अध्यायहरुलाई कण्ठस्थ गर्न सकेको छैनँ। मलाई थाहा छ, रटेर याद गर्ने मामलामा म अत्यन्त कमजोर छु। यसकारण जब पनि म कोही यस्तो व्यक्ति भेटछु, जसलाई 'गीता' कण्ठस्थ छ, उसकालागि मेरो मनमा सम्मान जागेर आउँछ। तमिलनाडुको यात्रामा यस्ता दुइजना व्यक्तिहरुसित मेरो भेट भइसकेको छ – मदुरामा एकजना सज्जन थिए र देवकोट्टामा एकजना महिला। मदुराका सज्जन एकजना व्यापारी हुन् र उनको कुनै ख्याति पनि छैन; महिलाको नाँउ हो पार्वती बाई, जो न्यायमूर्ति सदाशिव अय्यरकी पुत्री हुन्। श्री अय्यरले आफ्ना जीवन - कालमा नै 'गीता' कण्ठस्थ गर्ने सर्वेश्रेष्ठ गीतावाचकलाई प्रतिवर्ष एउटा पुरस्कार दिने व्यवस्था मिलाएका थिए। तर म चाहन्छु, यस्ता वाचकहरुलाई यो प्रतीति पनि हुनुपर्छ, मात्र वाचन नै उद्देश्य बन्नु हुँदैन। वाचन त 'गीता' का सन्देश र त्यसका अर्थका मनन र त्यसलाई हृदयंगम गर्ने एउटा साधनको रूपमा लिइनुपर्छ। एकोहोरो अभ्यास गराइएमा सुगाले पनि 'गीता' रटेर सुनाउनसक्तछ। तर यस्तोपाठले सुगा त सुगा नै भएर बसेको हुन्छ, त्यसमा धेर ज्ञान उत्पन्न हुने होइन। गीतावाचक, गीताकारको अपेक्षा अनुसार, व्यापक अर्थमा एकजना योगी हुन सक्नुपर्छ। 'गीता' को अपेक्षा

---

2.2.1934, पृष्ट 100-101, खंड—57, गान्धी वाङ्मय

छ, त्यसका अनुयायी आफ्ना मन, वचन र कर्मले संतुलित रहून र यी तीनवटाका बीचमा पूर्ण सामञ्जस्य रहोस्। जसका वचन र कर्म उसको विचारहरुका अनुरूप छैनन्, त्यो व्यक्ति कि त वंचक हुन्छ कि त पाखण्डी।



31

## भाषण : हरिजन आश्रम, अहमदाबादमा

म त 'गीता' को भक्त हुँ र कर्मको अटल सिद्धान्तमा मेरो पक्का विश्वास छ। सानोभन्दा सानो कुरा पनि बिना कारण हुँदैन। म बुझ्न सक्तिनँ, जसले मन, वचन र कर्मद्वारा 'गीता' को अनुसरण गर्ने चेष्टा गरेको छ, उसलाई कुनै बिमारी किन लाग्छ ? डाक्टरहरुको परिणाम हो। यो कुरा साँचो हो भने सम्भवतः म अनावश्यक रूपले चिन्तामा परिरहन्छु, अनावश्यक रूपले व्याकुल हुन्छु र गुप्त रूपले काम, क्रोध आदि विषयहरुलाई मैले आश्रम दिएको छु। तर जस्तै प्रयत्न गर्दा पनि कुनै कुरा वा घटनाले मेरो मनको शान्ति भंग हुन्छ भने त्यसको अर्थ यो होइन, 'गीता' को आदर्शमा कुनै दोष छ, तर यो बुझ्नपर्छ, मेरो श्रद्धामा नै कुनै दोष छ। 'गीता' को आदर्श त सदा-सर्वदाका लागि सत्य छ, अवश्य, मेरो त्यसलाई बुझ्ने वा पालन गर्ने काममा भूलहरु हुन सक्तछन्।

---

29.2.1936, पृष्ट 204-205, खंड—62, गान्धी वाङ्मय



32

# अहिंसा

जब कोही मानिसले यो भन्छ, म अहिंसा-परायण छु, उबाट यो आशा गरिन्छ, उसलाई कसैले केही नोक्सान गरिदिए उ रिसाउँदैन, उसको हानिको कामना गर्दैन र उसलाई कुनै प्रकारको शारीरिक कष्ट दिँदैन। उसले त अन्यायकर्त्ता द्वारा गराइदिएको हरेक प्रकारको नोक्सानलाई सहन गर्छ। यसरी अहिंसा पूर्ण निर्दोषिताको अवस्था हो; पूर्ण अहिंसाको अर्थ हो प्राणी मात्रप्रति दुर्भावको पूर्ण अभाव। यस कारण अहिंसामा मानिसभन्दा तल्ला तहका प्राणीहरु, हानिकर कीरा-फटेंग्रा धरि र पशुहरु पनि समावेश हुन्छन्। तिनीहरुको सृष्टि हाम्रा विनाशक प्रवृत्तिहरुलाई पोषण गरिरहनका निंति भएको होइन। हामीले सृष्टिकर्त्ताका हेतुलाई बुझ्नसके हामीलाई थाहा हुने थियो, उनका सृष्टिमा ती जीवहरुको उचित स्थान के हो ? अतएव, अहिंसाको क्रियात्मक के हो ? प्राणी मात्रप्रति सद्भावना। यही शुद्ध प्रेम हो। के हिन्दू-शास्त्र, के बाइबल र के कुरान, सबै ठाउँमा त म यही देख्छु।

अहिंसा एउटा पूर्ण स्थिति हो। सम्पूर्ण मनुष्य जाति यसै लक्ष्यतिर स्वभावतः तर चालै नपाई बढ़िरहेको छ। मानिस जब आफैआफ निर्दोषिताको साक्षात् मूर्त्ति बन्छ, तब उ केही दैवी पुरुष बन्दैन। आजको अवस्थामा त हामी केही अंशमा मानिस र केही अंशमा पशु छौं। हामी घुस्साका सट्टामा घुस्सा दिन्छौं, यसो गर्दा दाँत किट्छौं, माथिबाट आफ्ना दर्प र अज्ञानताका वशीभूत भएर यसलाई मानिस

---

9.3.1922, पृष्ट 23-24, खंड -23, गान्धी वाङ्मय

जातिको अस्तित्वलाई साँच्चै नै सार्थक बनाउनु हो पनि भनिदिन्छौं। हामी यो ढोंग रच्छौं, प्रतिहिंसा मानिसको स्वाभाविक प्रवृत्ति हो र हाम्रो यो बिना कामै चल्न सक्तैन। तर यसको विपरीत धर्मग्रन्थहरुमा त हामी पाउँछौं, प्रतिहिंसालाई कतै पनि अनिवार्य कर्त्तव्य त संयम हो। प्रतिहिंसा एउटा यस्तो प्रक्रिया हो, जसमा असंख्य नियम र उपनियमहरुलाई पालन गर्नुपर्ने कुरामा ध्यान दिनुपर्छ। र संयम त हाम्रा जीवनको सहज-सरल गति हो। बिना पूर्ण संयम मानिस पूर्णावस्थामा पुग्नसक्तैन। यसरी सहनशीलता – संयम नै मानिस जातिको विशेष धर्म हो।

लक्ष्य त सँधै अघि-अघि सरिरहेको हुन्छ। जसो-तसो गरेर पनि हामीलाई आफ्ना अयोग्यताका अधिकाधिक आभास हुन्छ। सन्तोष त प्रयत्नमा हुन्छ, अभीष्ट सिद्धिमा होइन। पूर्ण प्रयत्न नै पूर्ण विजय हो।



# 33

# हिन्दू पनि विमुख

म पूर्ण अहिंसामा विश्वास राख्छु र त्यसलाई समर्थन गर्छु, यसकारण केही मानिसहरुले त मलाई हिन्दू मात्र पनि अस्वीकार गरेका छन्। उनीहरुको भनाइ छ, म प्रच्छन्न ईसाई हुँ। मसित बड़ो संदिग्ध स्वरमा भनिन्छ, 'भगवद्गीता' को यो अर्थ लाउनु, त्यसमा विशुद्ध अहिंसा धर्मको उपदेश दिइएको छ, 'गीता' का अर्थलाई अनर्थ पार्नु हो। मेरा केही हिन्दू भाइहरु मसित भन्छन्, अमुक परिस्थितिमा 'भगवद्गीता' ले हिंसालाई धर्म मानेको छ। हालैमा एकजना उद्भट विद्वान सज्जनले 'गीता' को मेरो व्याख्यामा नाक खुम्च्याएर भने, 'गीता' को बारेमा केही टीकाकरहरुको यो मतको कुनै उचित आधार छैन, 'गीता' मा दैवी र आसुरी शक्तिहरुको बीचमा हुने सनातन संघर्षको चित्रण छ र थोरै पनि संकोच वा दुर्बलता नदेखाई आफ्ना आन्तरिक कश्मल हटाउनु हाम्रो कर्त्तव्य हो भन्ने देखाइएको छ।

अहिंसाका विरूद्धमा तमाम विचारहरुलाई यति विस्तारमा दिने प्रयोजन हो, साम्प्रदायिक समस्याको जुन समाधान म भन्नगइरहेछु, त्यसलाई बुझ्नचाहन्छन् भने यी विचारहरुलाई हृदयंगम गर्नु आवश्यक छ।

म आज आफ्ना चारैतिर जे-जति देखिरहेछु, त्यो त अहिंसा-प्रसारको विरुद्ध उत्पन्न भएको प्रतिक्रिया हो। मलाई यस्तो लाग्छ, हिंसाको एउटा शक्तिशाली लहर आइरहेछ। हिन्दू-मुस्लिम भेदभाव अहिंसाप्रति अरुचिको उग्र रुप हो।

---

29.5.1924, पृष्ट 142-144, खंड 24, गान्धी वाङ्मय

यस समस्यामाथि विचार गर्दा मलाई ध्यानमा राख्नुपर्ने केही आवश्यकतै छैन। मेरो धर्म त मेरो र मेरा सृजनहारका बीचको कुरा हो। म हिन्दू हुँ भने सम्पूर्ण हिन्दू समाजद्वारा बहिष्कार गरिए पनि म हिन्दू नै रहनेछु। यति त म भनि नै रहनेछु, धर्महरुको पर्यवसान अहिंसामा छ।

तर मैले मानिसहरुका सामु अहिंसाको परम रूपलाई कहिल्यै राखेको छैन, यसको कारण केवल यति नै भलै होस, त्यो प्राचीन संदेशलाई संसारका सामु राख्ने क्षमता म आफूमा रहेको मान्दिनँ। यद्यपि बुद्धिको धरातलमा मैले अहिंसाको त्यो परम स्वरूपलाई पूरा तवरले बुझिसकेको छु र ग्रहण पनि गरिसकेको छु, तथापि त्यो अझै मेरो रोम-रोममा परिसकेको छैन। मेरो शक्तिको आधार यति नै हो, जुन कुरालाई मैले स्वयं आफ्नो जीवनमा बारम्बार उपयोग गरेर हेरेको छैनँ, त्यसमा आचरण गर्नकालागि अरुलाई म भन्दिनँ। म त आज आफ्ना देशका दाज्यूभाइहरुसित अनुरोध गर्छु, उनीहरुले केवल दुइवटा उद्देश्यका लागि अहिंसालाई आफ्ना अन्तिम धर्मका रूपमा अपनाऊन् -- एउटा हो, विभिन्न जातिहरुका पारस्परिक सम्बन्धहरुका नियमनका लागि र अर्को, स्वराज्य प्राप्त गर्नकालागि। हिन्दू, मुसलमान, ईसाई, सिख र फारसीहरुले परस्परको मतभेद मेटाउनकालागि हिंसाको सहारा लिनुहुँदैन, र हामीहरुले स्वराज्य अहिंसात्मक तरीकाले प्राप्त गर्नुपर्छ। यसलाई म भारतका सामु कमजोरहरुका हतियारका रूपमा होइन, बलवान्‌हरुका हतियारका रूपमा पेश गर्ने साहस गर्छु। धर्मका मामलामा जबर्जस्ती नहोस, यसका बारेमा हिन्दू र मुसलमानहरु दुवै कुरा त धेरै गर्छन्, तर कोही हिन्दूले एउटा गाईको ज्यान बचाउनलाई कोही मुसलमानका ज्यान लिन्छ भने यसलाई जबर्जस्ती नभनेर के भन्ने ? यो त कोही मुसलमानलाई जबर्जस्ती हिन्दू बनाउने कोशिश गरेको जस्तो हुन्छ। त्यसरी नै मुसलमानले हिन्दूहरुलाई मस्जिदका सामु गान-बजान गरेकोमा जबर्जस्ती रोक्ने कोशिश गरे यसलाई पनि जबर्जस्ती गरेको होइन भने के गरेको हो भन्ने ? हल्ला-खल्ला भएर पनि मानिसले परमात्माको प्रार्थनामा तल्लीन हुन सक्नुमा ठूलो महत्व छ। अरु मानिसले हाम्रा धार्मिक भावनाका विचार राखि दिऊन् भन्ने सम्झनाका सट्टामा हामी जोर-जबर्जस्ती गर्छौं भने भावी सन्तानले हामीलाई अधर्मी र जंगली ठान्नेछन्। फेरि त तीस करोड संख्या भएको राष्ट्रले खालि एक लाख अंग्रेजहरुलाई होशमा ल्याउनका लागि हिंसा गर्न बाध्य हुनु लाजको कुरा हो। उनीहरुका हृदय-परिवर्तन गर्ने वा उनीहरुलाई यो देशबाट निकालिदिने तपाईंहरुको इच्छा हो भने हामीलाई यसको निंति शस्त्र-बलको होइन कि मनोबलको आवश्यकता छ। हामीहरुमा यो

मनोबल छैन भने हामीले शस्त्र-बल पनि जम्मा गर्न सक्ने छैनौं र जब हामीमा मनोबल आइसक्छ, शस्त्र-बलको आवश्यकता नभएको हामीहरु देख्ने छौं।

यसरी उपर्युक्त उद्देश्यहरुकालागि अहिंसा-धर्मलाई स्वीकार गर्नु हाम्रो राष्ट्रीय अस्तित्वको निंति सबभन्दा धेर स्वाभाविक र परम आवश्यक कुरा हो। यसद्वारा हामी आफ्ना समाजका संयुक्त शरीर-बललाई अपेक्षाकृत राम्रा काममा लाउन सिख्नेछौं। आज त हामी त्यसलाई दाज्यू-भाइका निरर्थक लड़ाईंमा, जसमा दुवै दल पूरै निर्बल हुन्छन्, नष्ट गरिरहेका छौं। यो बाहेक जबसम्म सम्पूर्ण राष्ट्रको समर्थन प्राप्त हुँदैन, प्रत्येक शस्त्र-विद्रोह पगलापना बन्छ र राष्ट्रको पूरा-पूरा समर्थन प्राप्त भए असहयोग कार्यक्रमको कुनै पनि अंग एक थोपा रगत नबगाई हामी आफ्ना उद्देश्यसम्म पुग्न सक्छौं।



# 34

# शुद्धि हुन सक्तैन

बेलायती खबरकागतका काटिएका टुक्राहरुबाट पाइने अनेकौं शुभसमाचारहरुमध्ये एउटा हो, कुमारी स्लेडले, जसलाई आश्रममा मीराबाई भनिन्छ, हिन्दू-धर्म स्वीकार गरेकी छन्। म भन्छु, उनले त्यसो गरेकी छैनन्। मलाई आशा छ, चार सालअघि, जब उनी आश्रममा आएकी थिइन्, तबदेखि आज उनी धेर राम्रो र साँचो ईसाई भएकी छिन्। उनी कोही काँचो उमेरकी बालिका होइनन्। उनको उमेर तीस सालभन्दा पनि बढ़ी छ र उनले एकलै मिश्र, फारस र यूरोपमा त्यहाँका वृक्ष र पशुहरुसित स्नेह-सम्बन्ध स्थापित गर्दै घुमिसकेकी छिन्। मलाई आफ्नो देखरेखमा कम्ति उमेरका मुसलमान, पारसी र ईसाई स्त्री-पुरुषहरुलाई राख्ने सौभाग्य मिलेको छ। यस अवधिमा हिन्दू-धर्म स्वीकार गर्न उनीहरुलाई कहिल्यै भनिएन। उनीहरुलाई आफ्नै धर्म-ग्रन्थहरु पढ़ने र तिनलाई आदर गर्ने काममा प्रोत्साहन दिइएको छ, र प्रेरणा पनि दिइएको छ। आज पनि म बड़ो प्रसन्नता का साथ आफ्ना ती साथी, स्त्री-पुरुष, बालक र बालिकाहरुका उदाहरण दिन सक्छु, जसलाई आफ्ना धर्मलाई पहिले भन्दा धेर प्रेम गर्न र राम्ररी बुझ्न सिखाइएको थियो र साथै जसलाई अरु धर्महरु अभ्यास गर्ने र तिनीहरु प्रति सहानुभूति र आदरका भाव राख्ने शिक्षा दिइएका थिए। आज पनि आश्रममा कैयन् धर्मका प्रतिनिधिहरु बस्छन्। कुनै प्रकारको पनि शुद्धि न त गरिन्छ, न त त्यस्तो अनुमति दिइन्छ। हामी मान्छौं, यी सब धर्म सच्चा र दैवी प्रेरणाका

---

20.2.1930, पृष्ट 507, खंड—42, गान्धी वाङ्मय

फल हुन्, तर तिनको पालन अपूर्ण मानिसद्वारा अपूर्ण मानिसलाई गराइन्छ, तिनमा कतिपय नराम्रा कुरा उत्पन्न भइसकेका छन्। कुमारी स्लेडको नाउँ हिन्दू होइन, हिन्दुस्तानी हो। यो नाउँ उनैले भनेर र सुबिस्ताका विचारले राखिएको हो।



# 35

## एकजना ईसाईको पत्र

हिन्दू-धर्ममा यीशुका लागि स्थान छ, त्यसबाट म त अझ धेर आश्वस्त भावले आफ्नो सहमति प्रकट गर्दै यो भन्नसक्छु, हो, यीशुका लागि यो धर्ममा पर्याप्त स्थान छ – ठीक त्यसरी नै जसरी मुहम्मद, जरयुश्त र मूसाका लागि छ। मेरो दृष्टिमा विभिन्न धर्म एउटा बगैचामा फुलेका सुन्दर फूलहरु जस्ता वा एउटै ठूलो रुखका अलग-अगल हाँगाहरु जस्ता छन्। यस कारण तिनीहरु सबैका सबै समान रुपले सत्यमय छन् र ती हामीहरुले मानिसहरुका माध्यमबाट प्राप्त गरेका हौं र हाम्रालागि तिनीहरुका व्याख्या पनि मानिसहरुले नै गरेका हुन्। यसकारण ती सबै अपूर्ण पनि समान रूपले छन्। भारतमा तथा अन्यत्र जुन ढंगले मानिसहरुलाई धर्मान्तरण गरिँदैछन्, तिनलाई कुनै पनि प्रकारले उचित मान्नु मेरो निंति असंभव छ। यो हाम्रो एउटा यस्तो भूल हो, जुन संसारलाई शान्तिको बाटोमा अग्रसर गराउनमा शायद सबभन्दा ठूलो बाधक बनिरहेछ। 'परस्पर युद्धरत धर्म' – यस्ता शब्दहरुको प्रयोग हुनु आफै-आफमा धर्मको निन्दा गर्नु हो। तर आज भारतमा, जसलाई म धर्म वा धर्महरुकी जननी मान्छु, जुन प्रकारको स्थिति छ, त्यसलाई वर्णन गर्न यी शब्दहरुको प्रयोग हुनु सबभन्दा उपयुक्त होला। त्यो साँच्चै धर्महरुकी जननी हो, माता हो भने त्यसको मातृत्व कसीमा रहेको छ। कोही ईसाईले कोही हिन्दूलाई ईसाई बनाउन किन चाहन्छ ? कोही हिन्दूले कोही ईसाईलाई हिन्दू बनाउन किन चाहन्छ ? कोही हिन्दू असल हिन्दू हो र ईश्वरपरायण छ भने

---

30.1.1937, पृष्ट 364, खंड—64, गान्धी वाङ्मय

त्यतिमै उ किन सन्तुष्ट हुँदैन ! मानिसका शील र नैतिकताको केही महत्व छैन भने कुनै गिर्जाघर, मस्जिद अथवा मन्दिरमा कुनै पद्धति विशेषद्धारा पूजा-अर्चना गर्ने रीति पनि एउटा थोत्रो रीति बाहेक केही होइन। र यो व्यक्ति वा समाजका बाधक पनि बन्न सक्छ। कुनै विशेष पद्धतिकालागि आग्रह गर्नु वा कुनै धार्मिक मान्यतालाई घरिघरि दोहोरयाउनु यस्ता उग्र झगड़ाहरुका प्रबल कारण बन्न सक्तछन्, जसले अन्त्यमा भीषण रक्तपात मचिन्छ र फलस्वरूप धर्मबाट अर्थात् ईश्वरबाट नै मानिसको विश्वास हराएर जान्छ।



36

# चर्चा : सी. एफ. एन्ड्रयुजसित

**सी. एफ. ए. –** मानिलिनोस्, कोही खूब विचार्ने र मार्ग-दर्शनकालागि प्रभुसित प्रार्थना गरेपछि भन्छ, ईसाई नबनी म शान्ति र मुक्ति पाउँदिनँ भने, तपाईं उसलाई के भन्नुहुन्छ?

**गा. –** कोही अ-इसाई वा मानिलिनोस, हिन्दू कोही ईसाईकहाँ गएर यसो भन्छ भने म भन्छु, उसलाई आफ्नो कल्याण धर्म-परिवर्त्तनमा खोज्नुको सट्टा एकजना असल हिन्दू बन्नका लागि भन्नुपर्छ।

**सी. एफ. ए. –** यो कुरामा म तपाईंसित पूरै सहमत हुन सक्तिनँ, यद्यपि तपाई मेरो स्थिति जान्नुहुन्छ। यीशुका शरणमा नगई मानिसले मुक्ति पाउन सक्तैन भन्ने कुरालाई त मैले छोड़ेको धेरै भइसक्यो। तर मानिलिनोस्, ऑक्सफोर्ड ग्रुप मुभमेन्टको एकजना सदस्यले तपाईका छोराको जीवन बदलिगरिदियो र उसले अब उ ईसाई हुनुपर्छ भन्ने अनुभव गर्न थाल्यो भने यस विषयमा तपाईं के भन्नुहुन्छ?

**गा. –** म त भन्छु, ऑक्सफोर्ड ग्रुपले जतिसुकैका जीवनलाई बदलि गरि देऊन् तर उनीहरुले धर्म बदलि गरिदिनु हुँदैन। उनीहरुले ती मानिसहरुका आफ्ना-आफ्ना धर्मका सर्वोत्तम तत्त्वहरुतिर उनीहरुका ध्यान आकृष्ट गरिदिई उनीहरुलाई तिनै अनुसार जीवन बिताउनु पर्ने कुरा भनिदिनुपर्छ। एक दिन एकजना मानिस म कहाँ आयो। उसका माता-पिता ब्राह्मण थिए। उसले मलाई भन्यो, तपाईंको (एन्ड्रयुजको) पुस्तक पढ़ेर उ ईसाई धर्म स्वीकार गर्न प्रेरित भयो। मैले

28.11.1936, **पृष्ट** 21-24, **खंड**—64, गान्धी वाङ्मय

उसलाई सोधें, के उ आफ्ना पूर्वजहरुका धर्मलाई भूल मान्छ ? उत्तरमा उसले भन्यो, 'होइन'। अनि मैले भनें, 'बाइबललाई संसारको एउटा श्रेष्ठ धर्म-ग्रन्थ र यीशु मसीहलाई एकजना महान् धर्मगुरु मान्नमा तपाईलाई के बाधा छ?' मैले उसलाई बुझाएँ, तपाईले (एन्ड्रयुजले) आफ्ना पुस्तकमा भारतीयहरुलाई बाइबल अपनाउन र ईसाई-धर्म अंगीकार गर्नका लागि कतै पनि भन्नुभएको छैन; र उसले तपाईका पुस्तकको भूल अर्थ लगाएको छ। तपाईको विचार नराम्रो भन्दा नराम्रो जीवन बिताउने मुसलमानलाई पनि राम्रो भन्दा राम्रो जीवन बिताउने हिन्दूहरु भन्दा राम्रो मान्ने स्वर्गीय मैलाना मुहम्मद अलीको जस्तो छ भने भिन्नै कुरा हो।

**सी. एफ. ए. –** म मौलाना मुहम्मद अलीको रायलाई अलिकति पनि स्वीकार गर्दिनँ। तर यो अवश्य भन्छु, कसैलाई आफ्नो धर्म बदलि गर्ने साँच्चै अनुभव भए मैले उसको बाटोमा बाधा दिनुहुँदैन।

**गा. –** उसको आफ्नो स्थितिमाथि फेरि एकपल्ट विचार गर्ने उसलाई मौका दिनुपर्छ भन्ने तपाई देख्नुहुन्न ? तपाई उसलाई केही पनि प्रश्न गर्नुहुन्न ! मानिलिनोस्, कोही ईसाई मकहाँ आएर भन्छ, 'भागवत' पढ़ेर म मुग्ध भएको छु र यस कारण हिन्दू बन्न चाहन्छु। त्यस्तो अवस्थामा म त उसलाई भन्छु, 'होइन' भाइ, होइन, जे-जति 'भागवत' मा छन्, ती सबै 'बाइबल' मा पनि छन्। अहिलेसम्म तिमीले तिनलाई त्यसमा खोज्ने कोशिश गरेनौ। कोशिश गर र राम्रा ईसाई बन।

**सी. एफ. ए. –** तपाईले जे भन्नुभयो, त्यस विषयमा म कुनै राय दिन सक्तिनँ। तर मलाई कसैले उ राम्रो ईसाई बन्न चाहन्छु भनेर भन्न आउँछ भने म त उसलाई 'तिम्रो इच्छा छ भने बन' भन्छु। यद्यपि तपाईंलाई थाहा नै छ, मैले आफूकहाँ धर्मान्तरणको तीव्र इच्छा लिएर आउने मानिसहरुलाई धरि त्यसो नगर्ने सल्लाह दिएको छु। मैले उनीहरुलाई भनेको छु, ठीक छ, तर म तपाईको त्यस्तो केही गर्ने कारण-रूप हुन्नँ। तर मानिसको स्वभाव नै हो, मानिसको मनलाई समाल्ने कुनै ठोस धर्मको आवश्यकता उसलाई पर्छ।

**गा. –** कोही बाइबलमा विश्वास गर्न चाहन्छ भने गरोस्, तर उसले धर्म किन बद्लनु ? धर्म - प्रचारको यो प्रवृत्तिले संसारमा शान्ति स्थापित हुँदैन। धर्म अत्यन्त नै निजी मामला हो। हामीले त आफ्नो-आफ्नो बुझाइ अनुसार, जस्तो ठीक लाग्छ त्यस्तै जीवन बिताउँदै, एका-अर्काका धर्महरुका राम्रा कुराहरु परस्पर आदान-प्रदान गर्नुपर्छ र यसरी ईश्वरका नगीच पुग्ने मानिसको प्रयत्नमा आफ्नो-आफ्नो सामर्थ्यभरि योग दिनुपर्छ।

विचार गरेर हेर्नोस, दुइवटामा तपाई कुन चाँहि स्थितिलाई स्वीकार गर्नुपर्छ – सबै धर्मका अनुयायीहरु एका-अर्काका धर्मप्रति सहिष्णुताको दृष्टिकोण अपनाएर हिंड्नु वा सबै धर्मलाई समान मानून्। संसारका सबै धर्म तत्त्वतः समान छन् भन्ने मेरो आफ्नो दृष्टिकोण छ। हामीमा आफ्नै धर्म जस्तै अरुका धर्मप्रति पनि सम्मानको भाव हुनुपर्छ। ध्यान राख्नोस् – पारस्परिक सहिष्णुता होइन, तर बराबर सम्मानको भाव।



# 37

# गाई

मलाई लाग्न थालेको छ, हिन्दू-धर्म झूठो हो भनेर आजकल ईसाई मित्रहरुले मुखले केही नभने पनि र स्वीकार नगरे पनि उनीहरुका मनमा यही भाव जमेर बसेको छ – हिन्दू–धर्म साँचो धर्म होइन र ईसाई धर्म मात्र – जस्तो उनीहरुले त्यसलाई सम्झिराखेका छन् – एउटा साँचो धर्म हो। उनीहरुको यो मनोवृत्ति ती उद्धरणबाट प्रकट हुन्छ, जुन मैले केही समय अघि सी. एम. एस. का अपीलमध्ये 'हरिजन' मा दिएको थिएँ। उक्त अपीलका पछित्तिर यही मनोवृत्तिले काम गरिरहेको कुरा जबसम्म नमानिने हुँदैन, तबसम्म त्यसको कदर गर्नु त टाढ़ाको कुरा हो, त्यसलाई बुझ्न पनि सकिँदैन। हिन्दू-समाजमा पसिराखेको छुवाछुत वा त्यस्तै अरू भूलहरुमाथि कसैले प्रहार गरे त्यो बुझ्न सकिन्छ। यी मानिएका नराम्रा कुराहरुलाई हटाउने र हाम्रो धर्मको शुद्धिमा उनीहरुले हामीलाई सहायता गरे यो एउटा यस्तो रचनात्मक कार्य हुनेछ, जसको ज्यादै आवश्यकता छ र त्यसलाई हामी कृतज्ञतापूर्वक स्वीकार पनि गर्नेछौं। तर आज त जुन प्रयास भइरहेछ, त्यसबाट त यही देखिन्छ, यो त हिन्दू-धर्मलाई जरैबाट उखेलेर फ्याक्ने र त्यसका ठाउँमा अरु धर्म स्थापना गर्ने तैयारी भइरहेछ। कुनै पुरानो घरलाई, जसलाई मरम्मत गर्नु अत्यन्त आवश्यक छ, तर त्यहाँ बस्नेहरुलाई राम्रो र काम चल्ने लायकको लाग्छ, माटोमा मिसाइदिन चाहे जस्तो कुरा हो। कोही गएर त्यो गृह-स्वामीलाई के - के सुधार र मरम्मत गर्नुपर्छ भनिदिए उसले त्यसलाई स्वागत

---

13 3 1937, पृष्ट 485-486, खंड--64, गान्धी वाङ्मय

नै गर्छ। तर कसैले त्यो घर नै, जसमा उ र उसका पूर्वजहरु बस्दै आएका छन्, भत्काउन थाले उसले त्यसो गर्नेलाई प्रतिकार गर्नेछ। हो, मरम्मतले काम चल्दैन, मानिस बस्ने लायकको त्यो रहेन भन्ने उसलाई नै विश्वास भए अर्कै कुरा हो। हिन्दू-धर्मका विषयमा ईसाई-संसारको यही मत छ भने 'सर्वधर्म-सम्मे' र 'अन्तर्राष्ट्रीय विश्व-बन्धुत्व' आदि शब्द निरर्थक भएर जान्छन्। किनभने यी दुवै शब्द समानताका सूचक हुन् र एउटा यस्तो मंच सूचित गर्छन, जहाँ सबै समान भावले एकत्रित हुनसक्छन्। कुनै धर्म उच्च छन् र कुनै धर्म उच्च छैनन् कुनैसित ज्ञानको प्रकाश छ र कुनैमा त्यो वंचित छ, कुनै सुसंस्कृत छन् र कुनै असंस्कृत, कुनै अभिजात छन् र कुनै कुजात, केही जाति सम्मिलित छन् र केही त्यसबाट बाहिर छन भन्ने मान्यता जहाँ हुन्छ, त्यहाँ सबका लागि सुलभ कुनै एउटा मंच कसरी हुनसक्छ? मेरो तुलना सदोष होला, शायद अपमानजनक पनि, मेरा युक्तिहरु पनि निर्दोष नहोलान्, तर म जुन कुरा भन्दैछु, त्यो अकाट्य छ।



38

# बातचीत : आर. आर. कीथनसंग

सबै धर्म सच्चा मात्र होइनन्, समान पनि छन् भनेर गान्धीजीले भनेका थिए। उनको यो कथनको आशयलाई श्री कीथनले बुझ्न सकेका थिएनन्। शास्त्रीय दृष्टिले सबै धर्म समान हुन् भन्नु ठीक छैन भन्न उनको विचार थियो। त्यसो भयो भने त मानिसहरु प्रकृतिपूजक र ईश्वरवादीहरुमा पनि तुलना गर्न थाल्ने छन्। म त भन्छु, धर्महरुलाई तुलना गर्नु नै व्यर्थ छ। ती सबै धर्म इश्वरलाई पाउने अलग-अलग बाटाहरु हुन्। के तपाईका विचारमा यो कुरालाई हामीले कुनै अरु शब्दहरुद्वारा बुझ्न सक्छौं ?

**गान्धीज्यू –** धर्महरुलाई तुलना गर्नु सम्भव छैन भन्ने तपाईको कुरा एकदमै ठीक हो। तर यसबाट यही निष्कर्ष निस्कन्छ, सबै धर्म समान छन्। सबै मानिस जन्मले स्वतन्त्र र समान हुन्छन् तर तिनीहरुमध्ये कोही अर्को भन्दा शारीरिक र मानसिक दुबै दृष्टिले धेरै सबल र दुर्बल हुन्छन्। यस कारण सतही तवरमा दुवैमा कुनै समानता छैन। तर एउटा तात्त्विक समानता अवश्य छ। त्यो हो हाम्रो नांगोपना – हाम्रो आवरणहीनताको स्थिति। ईश्वरले मलाई गान्धी र तपाईलाई कीथनका रूपमा अवश्यै हेर्दैनन्। र यो विराट विश्वमा हामी हौं नै के र? हामी त परमाणुहरुभन्दा पनि तुच्छ छौं र परमाणुहरु जस्तै हामीहरुमा को सानो छ र को ठूलो छ भनेर हाम्रा बारेमा सोध्नु व्यर्थ छ। तत्त्वतः हामी समान छौं। जाति औ रंग, शरीर अनि मस्तिष्क तथा जलवा र राष्ट्रका अन्तर क्षणभंगुर

13.3.1937, पृष्ट 462-463, खंड—64, गान्धी वाङ्मय

छन्। यसरी नै सबै धर्म तत्त्वतः समान छन्। तपाई 'कुरान' पढ्नुहुन्छ भने त्यसलाई मुसलमानका दृष्टिले पढ्नुपर्छ, 'बाइबल' पढ्नुहुन्छ भने निश्चय नै ईसाईको दृष्टिले पढ्नुपर्छ र 'गीता' पढ्नुहुन्छ भने हिन्दूका आँखाले पढ्नुपर्छ। दोषै-दोष निकाल्ने र कुनै धर्मलाई उपहास गर्ने के प्रयोजन हुनसक्तछ ? 'जेनेसिस' वा 'मेथ्यु' को पहिलो अध्यायलाई नै लिनुहोस। त्यसमा हामी एउटा लामो वंशावली पढ्न पाउँछौं र अन्त्यमा यीशुको जन्म एकजना कुमारीबाट भएको वर्णन छ। यहाँ आएर हाम्रा सामु एउटा अन्धकार देवल उभिएको पाउँछौं। कुरा बुझिँदैन। तर मैले त यी सबलाई एकजना ईसाईका आँखाले पढ्नु र बुझ्नुपर्छ।

**कीथन** – र फेरि हाम्रो 'बाइबल' मा पनि त मूसा र यीशुका प्रश्न छन्। के हामीले ती दुवैलाई समान मान्नुपर्छ ?

**गान्धीज्यू** – हो, किन भने सबै पैगम्बर समान छन्। यो त एउटा एकदमै समतल भूमि हो।

**कीथन** – हामीहरुले आइन्स्टाइनका सापेक्षवादका दृष्टिले विचार गरे सबै समान छन्। तर समानतालाई म ठीकसित व्यक्त गर्न सक्तिनँ। ठीकसित परिभाषित गर्न सक्तिनँ।

**गान्धीज्यू** – यसै कारण त सबै धर्म समान रूपले सत्य छन् भनेर म मान्छु, सबैमा दोष पनि समान रूपले विद्यमान् छन्। तपाई जति धेर सूक्ष्म रेखा कोर्नु हुन्छ, त्यो युक्लिडको सरल रेखाको त्यति नै नगीच हुन्छ, तर त्यो कहिले पनि साँचो सरल रेखा बन्न सक्तैनँ। धर्मको वृक्ष त एउटै हो; हो, त्यसका शाखाहरु जड़ वा स्थूल रूपले समान छैनन्। ती सबका सब विकासमान् छन् र जो व्यक्ति धेर विकासमान् शाखामा बसेको हुन्छ, उसले यो घमण्ड गर्नु हुँदैन -- 'हेर, यो मेरा शाखा अरु शाखाहरुभन्दा श्रेष्ठ छ। कोही पनि कसैको तुलनामा श्रेष्ठ छैन, औ न तुच्छ नै छ।



39

## भाषण : दलित वर्ग सम्मेलन, अह्मदाबादमा

मैले सँधै नै म सनातनी हिन्दू हुँ भनेर दृढ़तापूर्वक भनेको छु। मलाई हिन्दू-धर्मशास्त्रहरुको अलिकति पनि ज्ञान नभएको होइन। म संस्कृतको कोही ठूलो पण्डित पनि होइनँ। मैले 'वेद' र 'उपनिषद्' हरुका अनुवादहरु मात्र पढ़ेको छु। यस कारण स्वभावतः यी ग्रन्थहरुको मेरो अध्ययन पाण्डित्यपूर्ण छैन। मलाई तिनीहरुको जुन ज्ञान छ, त्यो कुनै प्रकारले पनि गम्भीर छ भन्नु मिल्दैन। तर एकजना हिन्दूले तिनीहरुको जति अध्ययन गर्नुपर्छ, त्यति मैले गरेको छु र म दृढ़तासाथ भन्छु, म तिनीहरुका मर्मसित परिचित भएको छु। 21 वर्षको पुग्दा-नपुग्दा त मैले अरु धर्मका ग्रन्थहरुको पनि अध्ययन गरिसकेको थिएँ।

एउटा समय थियो, जब म हिन्दू-धर्म र ईसाई धर्मका बीचमा ढलपल भइरहेको थिएँ। मेरो मानसिक सन्तुलन ठीक भएपछि मैले अनुभव गरें, मेरो मुक्ति हिन्दू-धर्ममा बसेर नै सम्भव छ र त्यस बेलादेखि हिन्दू-धर्ममा मेरो श्रद्धा धेर गहिरो र ज्ञानमय भएर गएको छ।

तर ती दिनहरुमा अस्पृश्यता हिन्दू-धर्मको अंग होइन र त्यो त्यसको अंग हो भने त्यस्तो हिन्दू-धर्म मलाई काम लाग्दैन भन्ने मेरो विश्वास थियो।

हिन्दू-धर्ममा अस्पृश्यतालाई पाप मानिँदैन भन्ने कुरा सत्य हो। म शास्त्रहरुका व्याख्याका सम्बन्धमा कुनै वाद-विवादमा पर्न चाहन्नँ 'भागवत' र 'मनुस्मृति' बाट प्रमाण झिकेर आफ्ना कुरालाई सिद्ध गर्नु शायद मेरा लागि कठिन पनि होला।

---

24.4.1921, पृष्ट 578, खंड—19, गान्धी वाङ्मय

तर म हिन्दू-धर्मका तत्त्वहरुलाई बुझिसकेको कुरा दृढ़तापूर्वक भन्छु। अस्पृश्यतालाई अनुमति दिएर हिन्दू-धर्मले पाप गरेको छ। यसले हाम्रो पतन गराएको छ र हामी साम्राज्यमा शूद्र जस्ता मानिन्छौं। हामीहरुबाट यो छुत मुसलमानहरुलाई पनि लागेको छ र दक्षिण अफ्रिका, पूर्वी अफ्रिका र कनाडामा हिन्दूहरुलाई जस्तै तिनीहरु पनि शूद्र मानिन्छन् यी सब दोष अस्पृश्यताका पापबाट उत्पन्न भएका हुन्।



# 40

## अस्पृश्यताको पाप

अस्पृश्यताको विधान धर्ममा छैन। यो त शैतानको एउटा चाल हो। शैतानले जहिले पनि शास्त्रहरुको दुहाइ दिएको छ। तर शास्त्र सत्य र विवेक भन्दा ठूलो हुँदैन। ती विवेकलाई निर्मल बनाउन र सत्यलाई उद्‌भाषित गर्नका लागि रचिएका हुन्। वेदहरुमा बलिदानको विधान छ भन्दैमा म कुनै निर्दोष घोड़ालाई अग्निमा होम्न तत्पर छैनँ। मेरा लागि 'वेद' दैवी र अपौरुषेय छ। [जस्तो 'बाइबल' मा भनिएको छ,] 'शास्त्रका वचनहरुका अक्षरार्थले सत्यलाई हनन् गर्छ।' जुन वस्तुले सत्यलाई प्रकाशित गर्छ, त्यो त त्यसमा रहेको भावना नै हो। र वेदहरुका असली भावना हुन् शुचिता, सत्य, निर्दोषिता, पवित्रता, विनयशीलता, सरलता, क्षमा, भक्तिमता र ती सबै थोक, जसले कोही पुरुष वा स्त्रीलाई उदार औ बहादुर बनाउँछन्। देशका यी महान् औ मूक सेवकहरु, भंगीहरुलाई कुकुरभन्दा पनि हीन मानेर तिरस्कार गर्नु र उनीहरुलाई थुक्नु न त उदारता हो औ न बहादुरी।

---

19.1.1921, पृष्ट 248-249, खंड—19, गान्धी वाङ्मय



41

# भाषण : अस्पृश्यतामा, अकोलामा

अस्पृश्यता - विषयक मेरो विचार मेरो पाश्चात्य शिक्षाको देन होइन। मेरा यी विचार इंग्लैण्ड जानु धेरै दिनअघि, शास्त्रहरुको अध्ययन गर्नुभन्दा पनि पहिले, एउटा यस्तो वातावरणमा बनिसकेको थियो, जो यिनका निंति अनुकूल थिए, किन भने मेरो जन्म एउटा कट्टर वैष्णव परिवारमा भएको थियो। तै पनि उमेर पुग्दादेखि नै यस सम्बन्धमा म आफ्ना यी विचारहरुमा दृढ़ भएर बसेको छु। पछि-पछि हिन्दू-धर्मग्रन्थहरुका तुलनात्मक अध्ययन र अनुभवबाट उत्पन्न मेरा यी विचार अझ दृढ़ हुँदै गए। शास्त्रहरुमा पंचम वर्णको कतै पनि उल्लेख भएको छैन र 'गीता' मा ब्राह्मण र भंगीलाई समान मान्ने स्पष्ट आज्ञा छ, र पनि हामी हिन्दू-धर्मका निधारमा लागेको यो कलंकलाई स्थिर राख्ने जबर्जस्ती किन गरिरहन्छौं – यो म बुझ्न सक्तिनँ। भंगी र ब्राह्मणलाई समान मान्नुको अर्थ साँचो ब्राह्मणप्रति हामीले यथोचित श्रद्धा राख्नु भन्ने होइन, यसको त अर्थ हो, भंगीलाई पनि अरू हिन्दूहरुलाई जस्तै सेवा पाउने हक छ, जस्तो ब्राह्मणलाई छ, उसले पनि सार्वजनिक शालाहरुमा त्यसरी नै पानी भर्न सक्छ र मन्दिरहरुमा गएर त्यसरी नै देव-दर्शन गर्नसक्छ, जसरी कोही पनि अरु हिन्दू।

---

7.2.1927, पृष्ट 54-55, खंड—33, गान्धी वाङ्मय



# 42

## सहस्रमुखी दानव*

तपाईं के यो सम्झनुहुन्छ, स्पर्श वा दृष्टिदोषहरुले वैदिक कालदेखि नै मान्यता पाई आएका हुन् ?

मलाई वेदहरुको त्यति ज्ञान छैन, जसको आधारमा विश्वास-साथ केही भन्नसकूँ, तर वेदहरुको पवित्रतामा मलाई पूरा विश्वास छ र स्पर्श वा दृष्टिदोषहरुको उल्लेख वेदहरुमा कतै पनि भएको छैन भन्नमा मलाई अलिकति पनि संकोचको अनुभव हुँदैन। तर मभन्दा पनि सर्वश्री सी. बी. वैद्य र पण्डित सातवलेकर जस्ता विद्वान्‌हरुले साधिकार भन्न सक्छन्। तै पनि यति म अवश्य भन्छु, नैतिकताको विरूद्ध कुनै पनि आचरण, वैदिक काल देखि नै चलिआएको हो भने पनि, तत्काल छोड़िदिनु योग्य छ। यस्ता आचरण त वेदहरुका मान्यताहरुका विपरीत हुन् र यो भन्दा पनि अझ धेर त ती आधारभूत आचरण-शास्त्रका विपरीत छन्।

पछिका चारवटा प्रश्नहरुलाई सार-रूपमा यसरी राख्न सकिन्छन् –

के तपाईं यो मान्नु हुन्न, कर्म-काण्ड आकर्षण-शक्तिका नियमहरुमा आधारित छ र स्पर्श र दृष्टिका दोष, जन्म र मृत्युका समयका सूतकहरुको विधान मनको पवित्रताको नीति हो ?

जहाँसम्म यस प्रकारका विधानहरुको प्रश्न छ, यो त भन्नैपर्छ, तिनका धेरथोर

---

* 3.10.1929, पृष्ट 542-543. खंड—41, गान्धी वाङ्मय

उपादेयता त छन् नै, तर वेदहरु, उपनिषदहरु, पुराणहरु र अन्य शास्त्रहरु र संसारका अन्य धर्मग्रन्थहरुमा पनि, मनको शुद्धता एउटा आन्तरिक प्रक्रिया हो भनेर स्पष्ट रूपमा भनिएका छन्। शारीरिक प्रक्रियाहरुबाट उत्पन्न हुने आकर्षण - शक्ति मनबाट मनमा पर्ने प्रभावहरुबाट उत्पन्न हुने सूक्ष्म आकर्षण शक्तिको तुलनामा केही पनि होइन। बाहिरी शुद्धिका निंति गरिएका कर्मकाण्डका फल-स्वरूप व्यक्ति दम्भी बनिदिए र उसले आफूलाई आफ्ना साथी मानिसहरुका तुलनामा श्रेष्ठ मान्न थाले र आफ्ना साथीहरुलाई पशुहरु जस्ता अथवा तिनीहरु भन्दा पनि नराम्रा सम्झन थाले यस्ता कर्मकाण्डले आत्मालाई हनन गर्छन्।

यस कारण विधि-निषेध तर्कसम्मत हुनुपर्छ। तिनीहरुद्वारा आत्माको हनन हुन्न। छुवाछुत सम्बन्धी नियम आत्माका विकाशमा बाधक भएको सिद्ध गरिसकिएको छ र यस्तै फेरि पनि सिद्ध गर्न सकिन्छ। यी नियम हिन्दू-धर्मका उदात्त भावनाहरुका पूर्णतः विपरीत छन्।



43

# डा. अम्बेडकरका दोषारोपण

पाठकहरुलाई सम्झना होला, गत महीनामा लाहौरमा जात-पात तोड़क मण्डलको वार्षिक अधिवेशन हुने भएको थियो र डा. अम्बेडकरले त्यसका सभापतित्व गर्ने भएका थिए। तर डा. अम्बेडकरले त्यसका निंति जुन भाषण तैयार गरेका थिए, त्यो स्वागत-समितिलाई स्वीकार्य प्रतीत भएन, जसका कारणले त्यो अधिवेशन नै भएन।

डा. अम्बेडकर स्वागत-समितिसित हार मान्ने मानिस होइनन्। उनीहरुका अस्वीकारका जवाफमा उनले आफ्नै खर्चमा त्यो भाषण प्रकाशित गरे। उनले त्यसको मूल्य आठ आना राखेका छन् तर म त भन्छु, उनले त्यसलाई घटाएर दुइ आना वा चार आना राखे ठीक हुन्छ।

कोही पनि सुधारकले त्यो भाषणलाई उपेक्षा गर्न सक्तैन। त्यो त्यस्तो छ। रूढ़िग्रस्त मानिसहरुले पनि यसलाई पढ़ेर लाभ पाउन सक्तछन्। तर यसबाट यो पनि सम्झनु हुँदैन, भाषणमा आपत्ति जनाउनुपर्ने खालका केही कुरा छैनन्। यसमा गम्भीर आपत्तिहरुकालागि स्थान भएका हुनाले यसलाई पढ़नु उचित छ। डा. अम्बेडकर त हिन्दू-धर्मकालागि एउटा चुनौती हुन्। उनको लालन-पालन एकजना हिन्दूको जस्तो भयो र एकजना हिन्दू नरेशद्वारा शिक्षित गराइएका भए ता पनि सवर्ण भनाउँदा हिन्दूहरुद्वारा आफ्नो र आफ्ना जातिका मानिसहरुसित हुने व्यवहारले उनी यति निराश भएका छन्, जुन उनको र तमाम हिन्दूहरुको संयुक्त

11.7.1936, पृष्ट 147-148; 18.7.1936, पृष्ट 167-168, खंड—63, गान्धी वाङ्मय

सम्पत्ति हो। त्यो धर्म मात्रै घोषणा गर्ने एउटा वर्गको व्यवहारले उनी हिन्दू-धर्मबाट नै निराश भएका छन्।

तर यसमा आश्चर्य मान्नु पर्ने केही छैन। किनभने कुनै प्रथा वा संस्थाका बारेमा राय त्यसका प्रतिनिधिहरुका व्यवहारबाट बनाउन सकिन्छ। यसबाहेक डा. अम्बेडकरले के पाए भने सवर्ण हिन्दूहरुको विशाल बहुमतले आफ्ना ती सहधर्मीहरुसित, जसलाई उनीहरुले अस्पृश्यका गन्तीमा हालेका छन्, निर्दयता वा अमानुषिकताका व्यवहार गरेका मात्र होइनन् कि आफ्ना व्यवहारका आधार पनि आफ्ना शास्त्रहरुका आदेशलाई बनाएका छन्। र जब डाक्टर अम्बेडकरले शास्त्रहरुका अध्ययन गरे, उनलाई ज्ञान भयो, वास्तवमा तिनका अस्पृश्यता र त्यसकालागि लगाइने तमाम अर्थहरुलाई यथेष्ट स्थान छन्। डा. अम्बेडकरले यी तीनवटा आरोपहरु लगाएको छन् – हरिजनहरुसित निर्दयतापूर्ण व्यवहार गरिन्छ; निर्दयतापूर्ण व्यवहार गर्ने मानिसहरु आफ्नो त्यो व्यवहारलाई निलर्ज्जतापूर्वक उचित देखाउँछन्; र हिन्दूहरुका शास्त्रमा यस्ता प्रकारका निर्दय व्यवहारलाई समर्थन गरिएका छन्। अनि आफ्नो यी आरोपहरुका समर्थनमा उनले शास्त्रहरुका अध्याय र श्लोकहरु उद्धृत गरेका छन्।

मेरो रायमा डा. अम्बेडकरले सबभन्दा ठूलो भूल यो गरेका छन्, उनले यस्ता उद्धरणहरु छाने, जसका प्रामाणिकता र महत्ता संदिग्ध छन्· र यस्ता पतनोन्मुख हिन्दूहरुका उदाहरण दिएका छन्, जो हिन्दू-धर्मका भूल रूपमा प्रतिनिधित्व गर्दछन्। डा. अम्बेडकरले जुन माप-दण्ड राखेका छन्, त्यस हिसाबले त संभवतः आजकलको कुनै पनि जीवित धर्म राम्रो हुन सक्तैन।

आफ्ना योग्यतापूर्ण भाषणमा विद्वान् (डाक्टर) ले आफ्ना पक्षलाई सिद्ध गर्ने कोशिशमा अतिशयोक्तिलाई काममा लाएका छन्। जुन धर्ममा चैतन्य, ज्ञानदेव, तुकाराम, तिरुवल्लवर, रामकृष्ण परमहंस, राजा राममोहन राय, महर्षि देवेन्द्रनाथ ठाकुर, विवेकानन्द तथा अरु धेरै यस्ता मानिसहरु, जसका नाउँ सहजै गन्न सकिन्छ, के त्यो धर्म गुणहरुले यति हीन हुन सक्तछ, जति डा. अम्बेडकरले आफ्ना भाषणमा सिद्ध गर्ने कोशिश गरेका छन् ? कुनै पनि धर्मको निर्णय त्यसका सबैभन्दा नराम्रा नमुनाहरुद्वारा होइन, त्यसका सर्वोत्तम नमुनाहरुद्वारा गरिनुपर्छ, किनभने त्यस धर्मका सर्वोत्तम नमुनाहरुलाई नै यस्तो आदर्श मान्न सकिन्छ, जसबाट अघि बढ्न नसकियोस ता पनि त्यहाँसम्म पुग्ने आकांक्षा लिनु नै पर्छ।



Laser typesetting by M/s Compudata Services, New Delhi-110014
and printed at M/s Modern Printers, Delhi-110032